# यूहन्नाको सुसमाचार

१ शुरुमा वचन हुनुहुन्थ्यो, अनि वचन
परमेश्वरसँग हुनुहुन्थ्यो, अनि वचन परमेश्वर
हुनुहुन्थ्यो । २ उहाँ नै शुरुमा परमेश्वरसँग
हुनुहुन्थ्यो। ३ सबै कुराहरू उहाँद्वारा हुनआए, अनि
हुनआएका कुराहरूमध्ये कुनै पनि उहाँबिना हुन-
आएन । ४ उहाँमा जीवन थियो, अनि त्यो जीवन
मानिसहरूको ज्योति थियो । ५ अनि त्यो ज्योति
अन्धकारमा चम्कन्छ, अनि अन्धकारले त्यसलाई
बुझ्न सकेन ।* ६ परमेश्वरबाट पठाइएका एक-
जना मानिस थिए, जसको नाम यूहन्ना थियो ।
७ सबैले उनीद्वारा* विश्वास गरून् भनेर ज्योतिको
विषयमा गवाही दिनलाई उनी साक्षीका निम्ति
आए । ८ उनीचाहिँ त्यो ज्योति थिएनन्, तर त्यस
ज्योतिको विषयमा गवाही दिन भनी उनी पठाइए।
९ साँचो ज्योति उहाँ हुनुहुन्थ्यो, जसले यस
संसारमा आउने हरेक मानिसलाई उज्यालो
पार्नुहुन्छ । १० उहाँ संसारमा हुनुहुन्थ्यो, अनि
उहाँद्वारा संसार हुनआयो, अनि संसारले उहाँलाई
चिनेन । ११ उहाँ आफ्नैकहाँ आउनुभयो, अनि
उहाँका आफ्नैले चाहिँ उहाँलाई ग्रहण गरेनन् ।
१२ तर जतिले उहाँलाई ग्रहण गरे, तिनीहरूलाई
उहाँले परमेश्वरका सन्तान हुने अधिकार
दिनुभयो; अर्थात् तिनीहरूलाई, जसले उहाँको
नाममा विश्वास गर्दछन्, १३ जो न ता रगतबाट,
न ता शरीरको इच्छाबाट, न ता मानिसको
इच्छाबाट, तर परमेश्वरबाट जन्मेका हुन् ।
१४ अनि वचन शरीर हुनुभयो, अनि हाम्रा
माझमा अनुग्रह र सत्यताले पूर्ण भएर वास
गर्नुभयो, अनि हामीले पिताका एक मात्र
जन्माइएका पुत्रको महिमाजस्तो उहाँको महिमा
देख्यौं। १५ यूहन्नाले उहाँकै विषयमा गवाही दिए,
अनि यसो भन्दै कराए: "यहाँ उहाँ हुनुहुन्छ,
जसको विषयमा मैले भनें, 'जो मपछि
आउनुहुन्छ, उहाँ मभन्दा पहिलो हुनुभएको छ;
किनभने उहाँ मभन्दा अघि हुनुहुन्थ्यो ।' " १६ अनि
उहाँकै परिपूर्णताबाट हामी सबैले पाएका छौं,
अनि अनुग्रहमाथि अनुग्रह; १७ किनभने मोशा-
द्वारा व्यवस्था दिइएको थियो, तर अनुग्रह
र सत्यताचाहिँ येशू ख्रीष्टद्वारा आए।
१८ परमेश्वरलाई कुनै मानिसले कहिल्यै देखेको
छैन, जन्माइएका एउटै पुत्रले मात्र, जो पिताको
छातीमा हुनुहुन्छ, उहाँले नै पिताको विषयमा
बताउनुभएको छ।

## बप्तिस्मा दिने यूहन्नाको सेवा

मत्ती ३:१-१२; मर्कूस १:१-८;
लूका ३:१-२०

१९ अनि जब यहूदीहरूले यरूशलेमबाट
पूजाहारीहरू र लेवीहरूलाई उनलाई 'तिमी को
हौ ?' भनी सोध्न पठाए, तब यूहन्नाको साक्षी यही
थियो, २० अनि उनले स्वीकार गरे, अनि इन्कार
गरेनन्, तर 'मचाहिँ ख्रीष्ट होइनँ' भनी स्वीकार
गरे । २१ अनि तिनीहरूले उनलाई सोधे: "तब के ?
के तिमी एलिया हौ ?" अनि उनले भने: "म
होइनँ ।" "के तिमी तिनै भविष्यवक्ता हौ ता ?"
अनि उनले जवाफ दिए, "होइनँ ।" २२ तब
तिनीहरूले उनलाई भने: "तिमी को हौ ता ? र
हामीलाई पठाउनेहरूलाई हामी जवाफ दिन

*१:५ वा 'त्यसमाथि विजयी भएन'; *१:७ वा 'उहाँद्वारा'

सकौं। तिमी आफ्नो विषयमा के भन्छौ?"
२३ उनले भनेः "मचाहिँ यशैया भविष्यवक्ताले
भनेझैं 'प्रभुको* बाटो सोझो पार' भन्दै
उजाड़स्थानमा कराउनेको आवाज हुँ।"†
२४ अनि ती पठाइएकाहरूचाहिँ फरिसीहरू-
मध्येका थिए। २५ अनि तिनीहरूले उनलाई सोधे,
र उनलाई भनेः "तिमी ख्रीष्ट होइनौ, एलिया वा
तिनै भविष्यवक्ता पनि होइनौ भने तिमी किन
बप्तिस्मा दिन्छौ ता?" २६ यूहन्नाले तिनीहरूलाई
यसो भन्दै जवाफ दिएः "म पानीमा बप्तिस्मा
दिन्छु, तर तिमीहरूका माझमा एकजना खड़ा
हुनुहुन्छ, जसलाई तिमीहरू चिन्दैनौ। २७ यहाँ
उहाँ हुनुहुन्छ, जो मपछि आएर मभन्दा पहिलो
हुनुभएको छ, जसको जुत्ताको फिता खोल्ने
योग्यको म छैनँ।" २८ यी कुराहरू यर्दनपारि
बेथबारामा भएका हुन्, जहाँ यूहन्नाले बप्तिस्मा
दिरहेका थिए।

२९ भोलिपल्ट यूहन्नाले येशूलाई आफूकहाँ
आइरहनुभएको देखे, र भनेः "हेर, परमेश्वरका
थुमालाई, जसले संसारको पाप उठाई
लैजानुहुन्छ। ३० यहाँ उहाँ हुनुहुन्छ, जसका
विषयमा मैले भनें, 'मपछि एकजना मानिस
आउनुहुन्छ, जो मभन्दा पहिलो हुनुभएको छ;
किनकि उहाँ मभन्दा अघि हुनुहुन्थ्यो।'
३१ अनि म उहाँलाई चिन्दिनथें; तर उहाँचाहिँ
इस्राएलकहाँ प्रकट होऊन् भनेर नै म पानीमा
बप्तिस्मा दिँदै आएँ।" ३२ अनि यूहन्नाले यसो
भन्दै गवाही दिएः "मैले आत्मालाई ढुकुरझैं
स्वर्गबाट ओर्लंदै आउनुभएको देखें, अनि उहाँ
उहाँमाथि बस्नुभयो। ३३ अनि म उहाँलाई
चिन्दिनथें, तर जसले मलाई पानीमा बप्तिस्मा दिन
पठाउनुभयो, उहाँले मलाई भन्नुभयो, 'जसमाथि
आत्मालाई ओर्लंदै गर्नुभएको र उहाँमाथि
बस्दै गर्नुभएको तिमीले देख्नेछौ, उहाँ नै पवित्र
आत्माले बप्तिस्मा दिनुहुने हुनुहुन्छ।' ३४ अनि
मैले देखें, र 'यहाँ नै परमेश्वरका पुत्र हुनुहुन्छ'
भनी गवाही दिएको छु।"

३५ फेरि भोलिपल्ट, यूहन्ना र उनका चेला-
हरूमध्ये दुईजना उभिरहेका थिए; ३६ अनि
येशूलाई हिँड्दै गर्नुभएको देखेर उनले भनेः
"हेर, परमेश्वरका थुमालाई!" ३७ अनि ती दुई
चेलाहरूले उनले बोलेको सुने, र तिनीहरू
येशूका पछि-पछि लागे। ३८ तब येशू पछिल्तिर
फर्किनुभयो, अनि तिनीहरूलाई पछि-पछि
आउँदै गरेका देखेर तिनीहरूलाई भन्नुभयोः
"तिमीहरू के खोज्दछौ?" अनि तिनीहरूले
उहाँलाई भनेः "हे रब्बी, (जसको अर्थ 'गुरुज्यू'
हो) तपाईं कहाँ बस्नुहुन्छ?" ३९ उहाँले
तिनीहरूलाई भन्नुभयोः "आओ, र हेर।"
तिनीहरू आए अनि उहाँ बस्नुभएको ठाउँ देखे,
र त्यो दिन उहाँसँगै रहे; किनकि समय दस बजे†
भएको थियो। ४० यूहन्नाको कुरा सुन्ने र उहाँलाई
पछ्याउने दुईजनामा एकजनाचाहिँ शिमोन
पत्रुसका दाजु अन्द्रियास थिए। ४१ तिनले पहिले
आफ्नै भाइ शिमोनलाई भेटे, र उनलाई भनेः
"हामीले मसीहलाई (जसको अर्थ 'ख्रीष्ट'‡ हो)
भेट्टाएका छौं।" ४२ अनि तिनले उनलाई येशूकहाँ
ल्याए। अनि येशूले उनलाई हेरेर भन्नुभयोः
"तिमी योनाका छोरा शिमोन हौ। तिमी केफास
(जसको अर्थ 'पत्रुस'§ हो) भनिनेछौ।"

४३ भोलिपल्ट येशूले गालील जाने इच्छा
गर्नुभयो, र फिलिपलाई भेट्टाउनुभयो, र तिनलाई

*१:२३ यस किताबभरि यो तारा-चिन्ह भएको 'प्रभु'-शब्दले 'यहोवा' परमेश्वरलाई सङ्केत गर्छ;
†१:२३ यशैया ४०:३; †१:३९ अक्षरशः 'दसौं घड़ी';
‡१:४१ हिब्रूमा 'मसीह', ग्रीकमा 'ख्रीष्ट', जसको अर्थ 'अभिषेक गरिएको जन' हुन्छ;
§१:४२ हिब्रूमा 'केफास', ग्रीकमा 'पत्रुस' (पेट्रोस), जसको अर्थ 'ठूलो ढुङ्गा' हो

भन्नुभयोः “मलाई पछ्याऊ।” ४४ अब फिलिप-
चाहिँ अन्द्रियास र पत्रुसको शहर, बेथसैदाका
थिए। ४५ फिलिपले नथनएललाई भेट्टाए, र
तिनलाई भनेः “हामीले उहाँलाई भेट्टाएका छौं,
जसको विषयमा मोशाले व्यवस्थामा लेखे, र
भविष्यवक्ताहरूले लेखे, अर्थात् यूसुफका पुत्र,
नासरतका येशूलाई।” ४६ अनि नथनएलले
उनलाई भनेः “के नासरतबाट कुनै असल कुरा
आउन सक्छ र?” फिलिपले तिनलाई भनेः
“आऊ र हेर।” ४७ येशूले नथनएललाई आफू-
कहाँ आइरहेका देख्नुभयो, र तिनको विषयमा
भन्नुभयोः “हेर, साँच्चै एउटा इस्राएली, जसमा
छल छैन।” ४८ नथनएलले उहाँलाई भनेः
“तपाईंले मलाई कहाँबाट चिन्नुभयो?” येशूले
जवाफ दिएर तिनलाई भन्नुभयोः “फिलिपले
तिमीलाई बोलाउनुभन्दा पहिले, तिमी नेभाराको
रूखमनि हुँदा नै मैले तिमीलाई देखें।”
४९ नथनएलले जवाफ दिएर उहाँलाई भनेः
“रब्बी, तपाईं परमेश्वरका पुत्र हुनुहुन्छ! तपाईं
इस्राएलका राजा हुनुहुन्छ!” ५० येशूले जवाफ
दिएर तिनलाई भन्नुभयोः “मैले तिमीलाई नेभाराको
रूखमनि देखें भनी तिमीलाई भनेकैमा तिमी
विश्वास गर्छौ? तिमीले यीभन्दा ठूला कुराहरू
देख्नेछौ।” ५१ अनि उहाँले तिनलाई भन्नुभयोः
“साँचो-साँचो म तिमीहरूलाई भन्दछु, अब उसो
तिमीहरूले स्वर्ग खोलिएको अनि परमेश्वरका
दूतहरूलाई मानिसका पुत्रमाथि उक्लँदै र ओर्लँदै
गरेका देख्नेछौ।”

## काना नामक शहरमा विवाह-भोज

२ अनि तेस्रो दिनमा गालीलको कानामा एउटा
विवाह थियो, अनि येशूकी आमा त्यहाँ थिइन्।
२ अनि येशू र उहाँका चेलाहरू पनि त्यस विवाहमा
निम्त्याइनुभएको थियो। ३ अनि तिनीहरूलाई
दाखमद्यको खाँचो पर्दा येशूकी आमाले उहाँलाई
भनिन्ः “तिनीहरूसित दाखमद्य छैन।” ४ येशूले
तिनलाई भन्नुभयोः “हे नारी, तपाईंसित मेरो के
काम छ र? मेरो समय अझै आएको छैन।”
५ उहाँकी आमाले नोकरहरूलाई भनिन्ः “उहाँले
तिमीहरूलाई जे भन्नुहुन्छ, त्यही गर।” ६ अनि
यहूदीहरूको शुद्ध हुने रीतिअनुसार एउटैमा
बीस-तीस पाथी अटाउन सक्ने छओटा पानी
हाल्ने ढुङ्गाका घ्याम्पाहरू त्यहाँ राखिएका थिए।
७ येशूले तिनीहरूलाई भन्नुभयोः “पानीका
घ्याम्पाहरूमा पानी भर।” अनि तिनीहरूले
तिनलाई मुख-मुखसम्म भरिदिए। ८ अनि उहाँले
तिनीहरूलाई भन्नुभयोः “अब उघाएर भोजका
मुखियाकहाँ लैजाओ।” अनि तिनीहरूले लगे।
९ जब भोजका मुखियाले दाखमद्य बनेको पानी
चाखे, अनि त्यो कहाँबाट आएको थियो, थाह
पाएनन्, (तर पानी उघाउने नोकरहरूलाई थाह
थियो), तब भोजका मुखियाले दुलहालाई बोलाए,
१० र तिनलाई भनेः “हरेक मानिसले शुरुमा असल
दाखमद्य टक्र्याउँछ, र मानिसहरूलाई मात लागे-
पछि कमसलचाहिँ; तर तपाईंले ता अझसम्म
असल दाखमद्य पो राखिछोड्नुभएको रहेछ।”
११ चिन्हहरूको यो शुरु येशूले गालीलको
कानामा गर्नुभयो, र आफ्नो महिमा प्रकट
गर्नुभयो, अनि उहाँका चेलाहरूले उहाँमाथि
विश्वास गरे। १२ त्यसपछि उहाँ कफर्नहुममा
झर्नुभयो, उहाँ र उहाँकी आमा, उहाँका भाइहरू
र उहाँका चेलाहरू; अनि उहाँहरू त्यहाँ धेरै
दिनसम्म रहनुभएन।

## प्रभु पहिलोपल्ट मन्दिरलाई शुद्ध पार्नुहुन्छ

१३ अनि यहूदीहरूको निस्तार-चाड*
नजिकै आइपुगेको थियो, अनि येशू माथि

*२:१३ प्रस्थान १२:१-५१

यरूशलेमतिर जानुभयो। १४ अनि उहाँले
मन्दिरमा गोरु, भेड़ा र ढुकुरहरू बेच्नेहरूलाई,
अनि सराफीहरूलाई बसिरहेका भेट्टाउनुभयो।
१५ अनि ससाना डोरीहरूको एउटा कोर्रा बनाएर
उहाँले ती सबैलाई, भेड़ाहरू र गोरुहरूलाई पनि,
मन्दिरबाट बाहिर लखेट्नुभयो, अनि सराफी-
हरूका पैसा घोप्ट्याइदिनुभयो, र टेबलहरू
पल्टाइदिनुभयो। १६ अनि उहाँले ढुकुर बेच्ने-
हरूलाई भन्नुभयो: "यी चीजहरूलाई यहाँबाट
लैजाओ; मेरा पिताको घरलाई व्यापारको घर
नतुल्याओ!" १७ अनि उहाँका चेलाहरूले यो
लेखिएको छ भनी सम्झना गरे, 'तपाईंको घरको
जोशले मलाई खाइसकेको छ।'* १८ तब
यहूदीहरूले उहाँलाई जवाफ दिएर भने: "तपाईं
यी कुराहरू गर्नुहुन्छ, त हामीलाई तपाईं के
चिन्ह देखाउनुहुन्छ?" १९ येशूले जवाफ दिएर
तिनीहरूलाई भन्नुभयो: "यस मन्दिरलाई
भत्काइदेओ, अनि म यसलाई तीन दिनमा खड़ा
गर्नेछु।" २० तब यहूदीहरूले भने: "यो मन्दिर
बनाउन छयालीस वर्ष लागेको थियो, अनि
तपाईंले चाहिँ यसलाई तीन दिनमा खड़ा
गर्नुहुनेछ?" २१ तर उहाँले आफ्नै शरीरको
मन्दिरको विषयमा भन्नुभएको थियो।
२२ यसकारण जब उहाँ मरेकाहरूबाट बौरेर
उठ्नुभयो, तब उहाँका चेलाहरूले, यो कुरा
उहाँले तिनीहरूलाई भन्नुभएको थियो भनी
सम्झे; अनि तिनीहरूले पवित्रशास्त्र र येशूले
भन्नुभएको वचनमाथि विश्वास गरे।

२३ अब निस्तार-चाड़मा, पर्वको दिन, जब
उहाँ यरूशलेममा हुनुहुन्थ्यो, उहाँले गर्नुभएका
चिन्हहरू देखेर धेरैले उहाँको नाममा विश्वास
गरे। २४ तर येशूले आफैलाई तिनीहरूको
भरोसामा छोड्नुभएन, किनभने उहाँले सबै
मानिसहरूलाई जान्नुहुन्थ्यो, २५ अनि कसैले
मानिसको विषयमा गवाही दिनु उहाँलाई खाँचो
थिएन; किनभने मानिसभित्र के हुन्छ, सो
उहाँलाई थाह थियो।

## निकोदेमस र नयाँ जन्म

३ फरिसीहरूमा निकोदेमस नाम भएका
एकजना मानिस थिए, जो यहूदीहरूका शासक
थिए। २ उनी राती येशूकहाँ आए, र उहाँलाई
भने: "रब्बी, तपाईं परमेश्वरबाट आउनुभएको
गुरु हुनुहुन्छ भनी हामीलाई थाह छ; किनकि
परमेश्वर साथमा रहनुभएन भने कसैले पनि यी
चिन्हहरू गर्न सक्दैन, जो तपाईं गर्नुहुन्छ।"
३ येशूले जवाफ दिएर उनलाई भन्नुभयो:
"साँचो-साँचो म तिमीलाई भन्दछु, कोही मानिस
नयाँ गरी* जन्मेन भने उसले परमेश्वरको
राज्यलाई देख्न सक्दैन।" ४ निकोदेमसले
उहाँलाई भने: "मानिस बूढ़ो भएपछि कसरी
जन्मन सक्छ र? के ऊ आफ्नी आमाको गर्भमा
दोस्रोचोटि पसेर जन्मन सक्छ र?" ५ येशूले
जवाफ दिनुभयो: "साँचो-साँचो म तिमीलाई
भन्दछु, कोही मानिस पानी र आत्माबाट जन्मेन
भने ऊ परमेश्वरको राज्यभित्र पस्न सक्दैन।
६ शरीरबाट जन्मिएको चाहिँ शरीर हो, अनि
आत्माबाट जन्मिएको चाहिँ आत्मा हो।
७ तिमीहरूले नयाँ गरी* जन्मनैपर्छ भनी मैले
तिमीलाई भनेकोमा तिमी अचम्म नमान।
८ हावा जहाँ चाहन्छ, त्यतै बहन्छ, अनि तिमीले
त्यसको आवाजचाहिँ सुन्छौ, तर त्यो कहाँबाट
आउँछ र कहाँ जान्छ, सो जान्दैनौ। आत्माबाट
जन्मेको हरेक यस्तै हुन्छ।" ९ निकोदेमसले
जवाफ दिएर उहाँलाई भने: "यी कुराहरू कसरी
हुन सक्छन्?" १० येशूले जवाफ दिएर उनलाई
भन्नुभयो: "तिमी इस्राएलका गुरु हौ, र पनि यी
कुराहरू जान्दैनौ? ११ साँचो-साँचो म तिमीलाई

*२:१७ भजन ६९:९; *३:३ र ७ ग्रीकमा 'माथिबाट'

भन्दछु, हामी जे जान्दछौं, त्यही भन्छौं, अनि
हामीले जे देखेका छौं, त्यसको गवाही दिन्छौं,
अनि तिमीहरू हाम्रा गवाही ग्रहण गर्दैनौ। १२ मैले
तिमीहरूलाई पृथ्वीका कुराहरू बताएको छु र
तिमीहरू विश्वास गर्दैनौ भने, मैले तिमीहरूलाई
स्वर्गका कुराहरू बताएँ भने ता तिमीहरूले कसरी
विश्वास गरौला? १३ अनि स्वर्गमा कोही मानिस
उक्ली गएको छैन, केवल उनी, जो स्वर्गबाट
ओर्ली आएका छन् अर्थात् मानिसका पुत्र, जो
स्वर्गमा छन्। १४ अनि जसरी मोशाले उजाड़-
स्थानमा साँपलाई उचाले, त्यसरी नै मानिसका
पुत्र पनि उचालिनुपर्छ; १५ यसैले कि उहाँमाथि
विश्वास गर्ने कोही पनि नष्ट नहोस्, तर उसले
अनन्त जीवन पाओस्। १६ किनभने परमेश्वरले
संसारलाई यस्तो प्रेम गर्नुभयो, कि उहाँले आफ्नो
एक मात्र जन्माइएको पुत्रलाई दिनुभयो –
उहाँमाथि विश्वास गर्ने कोही पनि नष्ट नहोस्,
तर उसले अनन्त जीवन पाओस्। १७ किनभने
संसारलाई दोषी ठहराउनका निम्ति होइन, तर
उहाँद्वारा संसारले मुक्ति पाओस् भनेर परमेश्वरले
आफ्ना पुत्रलाई संसारमा पठाउनुभयो। १८ जसले
उहाँमाथि विश्वास गर्दछ, ऊ दोषी ठहरिँदैन;
तर जसले विश्वास गर्दैन, त्यो पहिल्यै दोषी
ठहरिसकेको हुन्छ; किनकि त्यसले परमेश्वरका
एक मात्र जन्माइएको पुत्रको नाममा विश्वास
गरेको छैन। १९ अनि आरोप यो होः ज्योति
संसारमा आएको छ, अनि मानिसहरूले चाहिँ
ज्योतिलाई भन्दा बरु अन्धकारलाई प्रेम गरे;
किनकि तिनीहरूका कामहरू दुष्ट थिए।
२० किनभने दुष्ट काम गर्ने हरेकले ज्योतिलाई
घृणा गर्दछ, र त्यसका कामहरूका दोष प्रकट
नहोऊन् भनेर ज्योतिकहाँ आउँदैन। २१ तर
जसले सत्य काम गर्दछ, ऊचाहिँ, आफ्ना
कामहरू परमेश्वरमा गरिएका हुन् भनी देखा
परून् भनेर ज्योतिकहाँ आउँछ।"

## बप्तिस्मा दिने यूहन्नाको अन्तिम गवाही

२२ यी कुराहरूपछि येशू र उहाँका चेलाहरू
यहूदिया देशमा आउनुभयो; अनि त्यहाँ उहाँले
तिनीहरूसित रहेर बप्तिस्मा दिनुहुन्थ्यो। २३ अनि
यूहन्नाले पनि सालीमको नजिक एनोनमा
बप्तिस्मा दिरहेका थिए; किनभने त्यहाँ धेरै पानी
थियो, अनि तिनीहरू आएर बप्तिस्मा लिन्थे।
२४ किनकि यूहन्ना अहिलेसम्म झ्यालखानामा
हालिएका थिएनन्। २५ तब शुद्ध हुने विषयमा
यूहन्नाका केही चेलाहरू र यहूदीहरूका बीचमा
वादविवाद चल्यो। २६ अनि तिनीहरूले यूहन्ना-
कहाँ आएर उनलाई भनेः "रब्बी, यर्दनपारि जो
तपाईंसँग हुनुहुन्थ्यो, जसको विषयमा तपाईंले
गवाही दिनुभएको थियो, हेर्नुहोस्, उहाँले
बप्तिस्मा दिनुहुन्छ, र सबै मानिसहरू उहाँकहाँ
आउँछन्।" २७ यूहन्नाले जवाफ दिएर भनेः
"स्वर्गबाट मानिसलाई नदिइएसम्म त्यसले केही
पनि पाउन सक्दैन। २८ म ख्रीष्ट होइनँ, तर म-
चाहिँ उहाँको अघि पठाइएको हुँ भनी मैले भनें
भनेर तिमीहरू आफै मेरो विषयमा गवाही
दिन्छौ। २९ जससँग दुलही छन्, तिनी दुलहा हुन्;
तर उभिएर उनको कुरा सुन्ने दुलहाको साथीचाहिँ
दुलहाको सोरको कारणले साह्रै आनन्दित हुन्छ;
यसकारण मेरो यो आनन्द पूरा भएको छ। ३० उहाँ
बढ्नुपर्छ, तर मचाहिँ घट्नुपर्छ। ३१ माथिबाट
आउनुहुनेचाहिँ सबैभन्दा माथि हुनुहुन्छ; जो
पृथ्वीबाटको हो, ऊ पृथ्वीको हो, र पृथ्वीकै कुरा
बोल्छ; जोचाहिँ स्वर्गबाट आउनुहुन्छ, उहाँ
सबैभन्दा माथि हुनुहुन्छ। ३२ अनि उहाँले जे देख्नु
र सुन्नुभएको छ, त्यसकै गवाही उहाँले दिनुहुन्छ;
अनि उहाँको गवाही कसैले पनि ग्रहण गर्दैन।
३३ जसले उहाँको गवाही ग्रहण गरेको छ, उसले
'परमेश्वर सत्य हुनुहुन्छ' भनी छाप लगाएको छ।

३४ किनभने जसलाई परमेश्वरले पठाउनुभएको
छ, उहाँले परमेश्वरका वचनहरू बोल्नुहुन्छ;
किनकि परमेश्वरले उहाँलाई आत्मा नापी-
नापी दिनुहुन्न। ३५ पिताले पुत्रलाई प्रेम गर्नुहुन्छ,
र सबै कुराहरू उहाँको हातमा दिनुभएको छ।
३६ जसले पुत्रमाथि विश्वास गर्दछ, ऊसँग
अनन्त जीवन हुन्छ; अनि जसले पुत्रलाई
विश्वास गर्दैन, त्यसले जीवन देख्नेछैन, तर
परमेश्वरको क्रोध त्यसमाथि रहन्छ।"

## सामरी स्त्री

**४** यसकारण यूहन्नाले भन्दा येशूले बेसी
चेलाहरू बनाउनुभयो र बप्तिस्मा दिनुभयो भन्ने
कुरा फरिसीहरूले सुनेछन् भनी जब प्रभुले थाह
पाउनुभयो, २ (हुन ता येशू आफैले बप्तिस्मा
दिनुभएन, तर उहाँका चेलाहरूले दिन्थे), ३ तब
उहाँले यहूदिया छोड्नुभयो, र फेरि गालीलमा
जानुभयो। ४ अनि उहाँलाई सामरियाबाट भएर
जानुपरेको थियो। ५ तब उहाँ याकूबले आफ्नो
छोरा यूसुफलाई दिएको जमिनको छेवैमा,
सुखार भनिने सामरियाको शहरमा आउनुभयो।
६ अब याकूबको इनार त्यहाँ थियो। यसकारण
येशू यात्राले गर्दा थकित भएर त्यस इनारमा
बस्नुभयो; समय प्रायः ६ बजे[*] भएको थियो।
७ सामरियाकी एउटी स्त्री पानी भर्न आई; येशूले
उसलाई भन्नुभयो: "मलाई पानी पिउन देऊ।"
८ किनकि उहाँका चेलाहरूचाहिँ शहरमा
खानेकुरा किन्न गइसकेका थिए। ९ तब
सामरियाकी त्यस स्त्रीले उहाँलाई भनीः "तपाईं
यहूदी भएर पनि म एउटी सामरी स्त्रीबाट कसरी
पानी पिउन माग्नुहुन्छ?" किनभने यहूदीहरूले
सामरीहरूसँग केही सम्बन्ध राख्दैनन्। १० येशूले
जवाफ दिएर उसलाई भन्नुभयो: "यदि तिमीले
परमेश्वरको दानलाई जानेकी भए, र 'मलाई पानी
पिउन देऊ' भनी तिमीलाई भन्ने को हो, चिनेकी
भए तिमीले पो उनीसित माग्नेथियौ, र उनले
तिमीलाई जिउँदो पानी दिनेथिए।" ११ त्यस स्त्रीले
उहाँलाई भनीः "हजुर, तपाईंसँग उघाउने केही
चीज छैन, र इनारचाहिँ गहिरो छ; तब तपाईंले
कहाँबाट त्यो जिउँदो पानी पाउनुहुन्छ? १२ के
तपाईं हाम्रा पुर्खा याकूबभन्दा ठूलो हुनुहुन्छ,
जसले हामीलाई यो इनार दिनुभयो, अनि उहाँ
आफैले यसबाट पिउनुभयो, र उहाँका सन्तानहरू
र उहाँका गाईबस्तुले पनि पिए?" १३ येशूले
जवाफ दिएर उसलाई भन्नुभयो: "यस पानीबाट
पिउने हरेक फेरि तिर्खाउनेछ; १४ तर जसले त्यो
पानीबाट पिउला, जो म उसलाई दिनेछु, ऊ
कहिल्यै तिर्खाउनेछैन; तर जुन पानी म उसलाई
दिनेछु, त्यो ऊभित्र अनन्त जीवनका निम्ति
उम्रिरहने पानीको मुहान बन्नेछ।" १५ त्यस स्त्रीले
उहाँलाई भनीः "हजुर, मलाई यही पानी दिनुहोस्,
र म नतिर्खाऊँ न ता यहाँ पानी भर्न आऊँ।"
१६ येशूले उसलाई भन्नुभयो: "जाऊ,
आफ्ना पतिलाई बोलाऊ, र यहाँ आऊ।"
१७ त्यस स्त्रीले जवाफ दिएर भनीः "मेरा पति
छैनन्।" येशूले उसलाई भन्नुभयो: "मेरा पति
छैनन् भनेर तिमीले ठीक भन्यौ; १८ किनभने
पतिहरू ता तिम्रा पाँचजना भइसकेका छन्, अनि
जो अहिले तिमीसँग छन्, तिनी तिम्रा पति
होइनन्; तिमीले यो साँचो भनेकी छौ।" १९ त्यस
स्त्रीले उहाँलाई भनीः "हजुर, तपाईं भविष्य-
वक्ता हुनुहुन्छ भनी म थाह पाउँछु। २० हाम्रा
पिता-पुर्खाहरूले यस पहाड़मा[†] उपासना[‡] गरे,
तर तपाईंहरू भन्नुहुन्छ, 'यरूशलेम पो त्यो ठाउँ
हो, जहाँ मानिसहरूले उपासना गर्नुपर्दछ।'"
२१ येशूले उसलाई भन्नुभयो: "हे नारी, मलाई
विश्वास गर; समय आउँछ, जुन घड़ी तिमीहरूले
न ता यस पहाड़मा न ता यरूशलेममा पिताको

[*] ४:६ अक्षरशः 'छैटौं घड़ी'; [†] ४:२० अर्थात् गेरीजीम पहाड़; [‡] ४:२० उपासनाको अर्थ दण्डवत् गर्नु हो

उपासना गर्नेछौ। २२ तिमीहरू जसलाई चिन्दैनौ,
उहाँको उपासना गर्दछौ; हामीचाहिँ जसलाई
चिन्दछौं, उहाँकै उपासना गर्दछौं; किनकि मुक्ति
यहूदीहरूबाट छ। २३ तर त्यो समय आउँछ, र
अहिले नै हो, जुन घड़ी साँचो उपासकहरूले
पिताको उपासना आत्मामा र सत्यतामा गर्नेछन्;
किनकि उहाँको उपासना गर्नालाई पिताले
यस्तैहरूलाई खोज्नुहुन्छ। २४ परमेश्वर आत्मा
हुनुहुन्छ, अनि उहाँको उपासना गर्नेहरूले
आत्मामा र सत्यतामा उपासना गर्नुपर्दछ।''
२५ त्यस स्त्रीले उहाँलाई भनीः ''मलाई थाह छ,
'मसीह' आउनुहुन्छ, जो 'ख्रीष्ट' भनिनुहुन्छ; जब
उहाँ आउनुहुन्छ, उहाँले हामीलाई सबै कुरा
बताउनुहुनेछ।'' २६ येशूले उसलाई भन्नुभयोः
''तिमीसँग बोल्ने, म उही हुँ।''

२७ अनि त्यही घड़ी उहाँका चेलाहरू आए,
र उहाँले त्यस स्त्रीसँग बात गर्नुभएकोमा तिनीहरू
छक्कै परे; तरै पनि 'तपाईं के खोज्नुहुन्छ?'
अथवा 'तपाईं किन ऊसँग बात गर्नुहुन्छ?' भन्ने
कुरा कसैले पनि गरेनन्। २८ तब त्यस स्त्रीले
आफ्नो पानीको गाग्रो छोड़ी, शहरभित्र गई, र
मानिसहरूलाई भनीः २९ ''आओ, एकजना
मानिसलाई हेर, जसले मैले जे-जे गरें, ती सबै
कुराहरू मलाई बताउनुभयो; के उहाँ नै ख्रीष्ट
हुनुहुन्न र?'' ३० तब तिनीहरू शहरदेखि निस्केर
उहाँकहाँ आए। ३१ त्यही समयमा उहाँका
चेलाहरूले, ''हे रब्बी, खानुहोस्'' भन्दै उहाँलाई
विन्ती गरे। ३२ तर उहाँले तिनीहरूलाई भन्नुभयोः
''खानका निम्ति मसँग भोजन छ, जसलाई
तिमीहरू जान्दैनौ।'' ३३ यसकारण चेलाहरूले
एक-अर्कासँग कुरा गरेः ''कसैले उहाँका निम्ति
खानलाई केही ल्याइदिएको पो छ कि?''
३४ येशूले तिनीहरूलाई भन्नुभयोः ''जसले मलाई
पठाउनुभयो, उहाँको इच्छा पालन गर्नु र उहाँको
काम गरिसिद्ध्याउनु नै मेरो भोजन हो। ३५ अझै
चार महिना छन्, र बाली काट्ने समय आउँछ
भनी के तिमीहरू भन्दैनौ र? हेर, म तिमीहरूलाई
भन्दछु, आफ्ना आँखा उठाओ र खेतबारीहरू-
तिर हेर; किनकि ती कटनीका निम्ति पहेंलै*
भइसकेका छन्। ३६ अनि जसले बाली काट्छ,
उसले ज्याला पाउँछ, अनि अनन्त जीवनका
निम्ति फल बटुल्छ, कि छर्ने र बाली काट्ने
दुवैले एकसाथ रमाउन पाऊन्। ३७ अनि
'एउटाले छर्छ र अर्कोले कटनी गर्छ' भन्ने यो
भनाइ यसैमा सत्य ठहरिन्छ। ३८ जसका निम्ति
तिमीहरूले परिश्रम गरेका छैनौ, त्यसैको कटनी
गर्न मैले तिमीहरूलाई पठाएँ; अरूले परिश्रम
गरे, अनि तिमीहरूचाहिँ तिनीहरूका परिश्रमभित्र
पसेका छौ।''

३९ अनि 'मैले जे-जे गरें, ती सबै कुराहरू
उहाँले मलाई बताइदिनुभयो' भन्दै गवाही दिने
त्यस स्त्रीको कुराको कारणले त्यस शहरका
सामरीहरूमध्ये धेरैले उहाँमाथि विश्वास गरे।
४० यसकारण जब ती मानिसहरू उहाँकहाँ आए,
तिनीहरूले 'हामीसँग रहनुहोस्' भनी उहाँलाई
विन्ती गरे; अनि उहाँ दुई दिनसम्म त्यहाँ
रहनुभयो। ४१ अनि उहाँका आफ्नै वचनको
कारणले अझै धेरैले विश्वास गरे। ४२ अनि त्यस
स्त्रीलाई भनेः ''अब उसो हामी तिम्रो भनाइकै
कारणले मात्र विश्वास गर्दैनौं, किनकि हामी
आफैले सुनेका छौं, र जान्दछौं, उहाँ साँच्चै
संसारका मुक्तिदाता 'ख्रीष्ट' हुनुहुन्छ।''

## प्रभुले राजकर्मचारीको छोरालाई निको पार्नुभयो

४३ अब दुई दिनपछि उहाँ त्यहाँबाट निस्केर
गालील जानुभयो। ४४ किनकि येशू आफैले
'आफ्नो देशमा भविष्यवक्ताको आदर हुँदैन'

*४:३५ ग्रीकमा 'सेता'

भनी गवाही दिनुभयो। ४५ यसकारण जब उहाँ
गालीलमा आउनुभयो, तब गालीलीहरूले
चाड़को समयमा यरूशलेममा उहाँले गर्नुभएका
सबै कुराहरू देखेका हुनाले उहाँलाई स्वागत गरे,
किनकि तिनीहरू पनि त्यस चाड़मा गएका थिए।
४६ यसकारण येशू फेरि गालीलको कानामा
आउनुभयो, जहाँ उहाँले पानीलाई दाखमद्य
बनाउनुभएको थियो। अनि त्यहाँ कुनै एकजना
राजकर्मचारी थिए, जसको छोरो कपर्नहुममा
बिरामी थियो। ४७ येशू यहूदियाबाट गालीलमा
आउनुभएको छ भन्ने कुरा सुनेर तिनी उहाँकहाँ
गए, अनि 'तल झरेर मेरो छोरालाई निको
पारिदिनुहोस्' भनी उहाँलाई विन्ती चढ़ाए;
किनकि ऊ मर्नै आँटेको थियो। ४८ तब येशूले
तिनलाई भन्नुभयो: "चिन्ह र अचम्मका कामहरू
नदेखुन्जेल तिमीहरूले कुनै प्रकारले विश्वास
गर्नेछैनौ।" ४९ राजकर्मचारीले उहाँलाई भनेः
"हजुर, मेरो नानी मर्नुभन्दा पहिल्यै तल
आइदिनुहोस्।" ५० येशूले तिनलाई भन्नुभयो:
"जाऊ, तिम्रो छोरो बाँच्छ।" अनि येशूले तिनलाई
भन्नुभएको वचन त्यस मानिसले विश्वास गरे, र
आफ्नो बाटो लागे।

५१ अनि तिनी तल झर्दै गर्दा तिनका
दासहरूले तिनलाई भेटे, र 'तपाईंका छोरा
बाँच्छन्' भनी तिनलाई भने। ५२ तब तिनले कुन
घड़ीदेखि ऊ सन्चो हुन थाल्यो भनी तिनी-
हरूलाई सोधे। अनि तिनीहरूले तिनलाई भनेः
"हिजो, सात बजे* ज्वरोले तिनलाई छोड्यो।'
५३ यसकारण येशूले तिनलाई 'तिम्रो छोरो
बाँच्छ' भनेकै बेलामा हो रहेछ भनी बाबुचाहिँले
थाह पाए; अनि तिनी आफैले विश्वास गरे, र
तिनका सारा परिवारले पनि। ५४ यहूदियाबाट
गालीलमा आउनुभएपछि येशूले गर्नुभएको
यो फेरि दोस्रो चिन्ह हो।

## बेथेस्दा नामक दहमा अठतीस वर्षदेखिको रोगी

**५** त्यसपछि यहूदीहरूको एउटा चाड़ थियो,
अनि येशू माथि यरूशलेम जानुभयो। २ अब
यरूशलेममा, भेड़ा ढोकाको नजिकमा, हिब्रू
भाषामा बेथेस्दा नाम भएको एउटा दह थियो,
जसका पाँचोटा दलानहरू थिए। ३ तीभित्र रोगी,
अन्धा, लङ्गड़ा र अङ्ग सुकेकाको एउटा ठूलो
भीड़ पानी कहिले छचल्किएला भनी पर्खंदै
पर्खिरहेको हुन्थ्यो। ४ किनभने बेला-बेलामा
एउटा स्वर्गदूतले दहभित्र ओर्लेर पानी
खल्बलाइदिन्थे; यसकारण पानी छचल्किएपछि
जो त्यसभित्र पहिले ओर्लिन्थ्यो, ऊ जस्तै रोग
लागेको भए तापनि निको भइहाल्थ्यो। ५ अनि
त्यहाँ अठतीस वर्षदेखि रोग लागेको कुनै एउटा
मानिस थियो। ६ येशूले त्यसलाई पर्खिरहेको
देखेर, अनि त्यो धेरै समयदेखि त्यस दशामा रहेको
हो भनी जानेर उहाँले त्यसलाई भन्नुभयो: "के
तिमी निको हुन चाहन्छौ?" ७ त्यस रोगी मानिसले
उहाँलाई जवाफ दियो: "हजुर, पानी छचल्किँदा
मलाई दहभित्र ओराल्ने कोही मानिस छैन; तर
म आफू आउँदा-आउँदै मभन्दा पहिल्यै अर्को
ओर्लिजान्छ।" ८ येशूले त्यसलाई भन्नुभयो:
"उठ; आफ्नो ओछ्यान उठाऊ, र हिँड़।"
९ अनि तुरुन्तै त्यो मानिस निको भइहाल्यो। अनि
आफ्नो ओछ्यान उठायो र हिँड्यो। अनि त्यही
दिन विश्रामदिन थियो।

१० यसकारण यहूदीहरूले त्यस निको
पारिएको मानिसलाई भनेः "यो विश्रामदिन हो,
तिमीलाई आफ्नो ओछ्यान बोक्नु उचित छैन।"
११ त्यसले तिनीहरूलाई जवाफ दियो: "जसले
मलाई निको पार्नुभयो, उहाँले नै मलाई 'आफ्नो
ओछ्यान उठाऊ, र हिँड़' भन्नुभयो।" १२ तब

*४:५२ अक्षरशः 'सातौं घड़ी'

तिनीहरूले त्यसलाई सोधेः "तिमीलाई 'आफ्नो
ओछ्यान उठाऊ र हिँड़' भन्ने मानिस को हो ?"
१३ तर त्यो निको पारिएको मानिसले, उहाँ को
हुनुहुन्थ्यो, चिनेको थिएन; किनभने त्यस ठाउँमा
भीड़ भएको हुनाले येशू त्यहाँबाट गइसक्नु-
भएको थियो।

१४ त्यसपछि येशूले त्यस मानिसलाई
मन्दिरमा भेट्टाउनुभयो, र त्यसलाई भन्नुभयोः
"हेर, तिमी निको पारिएका छौ; अबदेखि उसो
पाप नगर, नत्र झन् खराब कुरा तिमीमाथि
आइलाग्ला।" १५ त्यो मानिस गयो, अनि मलाई
निको पार्ने ता येशू हुनुहुँदो रहेछ भनी यहूदी-
हरूलाई भनिदियो। १६ अनि यही कारणले गर्दा
यहूदीहरूले येशूलाई सताए, र उहाँलाई मार्न
खोजे; किनभने उहाँले यी कुराहरू विश्रामदिनमा
गर्नुभएको थियो। १७ तर येशूले तिनीहरूलाई
जवाफ दिनुभयोः "मेरा पिता अहिलेसम्म काम
गर्नुहुन्छ, र म काम गर्छु।" १८ यसकारण
यहूदीहरूले झन् बढ़्ता गरी उहाँलाई मार्न खोजे;
किनभने उहाँले विश्रामदिनलाई मात्र भङ्ग
गर्नुभएको थिएन, तर आफूलाई परमेश्वरसँग
बराबरी तुल्याउँदै 'परमेश्वर मेरा पिता हुनुहुन्छ'
पनि भन्नुभयो। १९ तब येशूले तिनीहरूलाई
जवाफ दिएर भन्नुभयोः "साँचो-साँचो म
तिमीहरूलाई भन्दछु, पुत्रले पितालाई जे
गरिरहनुभएको देख्छन्, त्योबाहेक अरू केही पनि
उनी आफैले गर्न सक्दैनन्; किनकि उहाँले जे
कुराहरू गर्नुहुन्छ, पुत्रले पनि तिनैलाई त्यही
प्रकारले गर्दछन्। २० किनकि पिताले पुत्रलाई
प्रेम गर्नुहुन्छ, र सबै कुराहरू, जो उहाँ आफैले
गर्नुहुन्छ, सो उनलाई देखाउनुहुन्छ; अनि तिमीहरू
छक्क पर भनेर उहाँले यीभन्दा ठूला कामहरू
उनलाई देखाउनुहुनेछ। २१ किनकि जसरी पिताले
मरेकाहरूलाई बौराउनुहुन्छ, र तिनीहरूलाई
जीवित पार्नुहुन्छ, उसरी नै पुत्रले पनि जसलाई
चाहन्छन्, त्यसलाई जीवित पार्छन्। २२ किनकि
पिताले कसैको न्याय गर्नुहुन्न, तर जसरी सबै
मानिसहरूले पितालाई आदर गर्दछन्, उसरी नै
तिनीहरूले पुत्रलाई पनि आदर गरून् भनेर सबै
न्याय पुत्रलाई सुम्पिनुभएको छ। २३ जसले
पुत्रलाई आदर गर्दैन, त्यसले उनलाई पठाउनुहुने
पितालाई पनि आदर गर्दैन। २४ साँचो-साँचो म
तिमीहरूलाई भन्दछु, जसले मेरो वचन सुन्छ र
मलाई पठाउनुहुनेमाथि विश्वास गर्छ, ऊसँग
अनन्त जीवन छ, र ऊ न्यायमा पर्नेछैन, तर
मृत्युबाट जीवनमा सरिसकेको हुन्छ।"

२५ "साँचो-साँचो म तिमीहरूलाई भन्दछु,
त्यो घड़ी आइरहेको छ, र अहिले नै हो, जब
मरेकाहरूले परमेश्वरका पुत्रको सोर सुन्नेछन्;
अनि जसले सुन्दछन्, ती जिउनेछन्। २६ किनभने
जसरी पिता आफैमा जीवन छ, उसरी नै उहाँले
पुत्रलाई आफैमा पनि जीवन होओस् भनेर
दिनुभएको छ, २७ अनि उनलाई न्याय गर्ने
अधिकार पनि दिनुभएको छ; किनभने उनी
मानिसका पुत्र हुन्। २८ यस कुरामा अचम्म
नमान; किनभने त्यो घड़ी आइरहेको छ, जसमा
चिहानभित्र रहेका सबैले उनको सोर सुन्नेछन्,
२९ अनि भलो गर्नेहरू जीवनको बौरिउठाइका
निम्ति, र दुष्ट काम गर्नेहरूचाहिँ दण्डको
बौरिउठाइका निम्ति निस्किआउनेछन्।
३० आफ्नैपट्टिबाट म केही पनि गर्न सक्दिनँ;
जस्तो म सुन्दछु, त्यस्तै म न्याय गर्दछु, अनि मेरो
न्याय ठीक छ; किनभने म आफ्नै इच्छा होइन,
तर मलाई पठाउनुहुने पिताको इच्छा खोज्दछु।"

## ख्रीष्ट येशूका चार साक्षी

३१ "मैले आफ्नै विषयमा गवाही दिएँ भने
मेरो गवाही सत्य हुँदैन। ३२ मेरो विषयमा गवाही
दिने अर्कै एकजना छन्, र म जान्दछु, जुन गवाही
उनले मेरो विषयमा दिन्छन्, त्यो गवाही सत्य छ।

३३ तिमीहरूले यूहन्नाकहाँ पठाएका छौ, अनि
उनले सत्यको विषयमा गवाही दिएका छन्।
३४ तर मानिसबाटको गवाही म ग्रहण गर्दिनँ; तर
तिमीहरूले मुक्ति पाओ भनेर म यी कुराहरू
भन्दछु। ३५ उनी बलिरहने र चम्किरहने बत्ती
थिए, अनि केही समयसम्म उनको ज्योतिमा
आनन्द मनाउन तिमीहरू राजी भयौ। ३६ तर
मसँग यूहन्नाको भन्दा ठूलो साक्षी छ; किनकि
जुन कामहरू पिताले मलाई पूरा गर्नका निम्ति
दिनुभएको छ, ती कामहरूले नै, जो म गर्दछु,
पिताले मलाई पठाउनुभएको हो भनी मेरो
विषयमा गवाही दिन्छन्। ३७ अनि मलाई
पठाउनुहुने पिता आफैले मेरो विषयमा गवाही
दिनुभएको छ। तिमीहरूले न ता कुनै समयमा
उहाँको सोर सुनेका छौ, न ता उहाँको रूप नै
देखेका छौ। ३८ अनि उहाँको वचन तिमीहरू-
भित्र रहिरहेको छैन; किनकि जसलाई उहाँले
पठाउनुभएको छ, उनलाई तिमीहरू विश्वास
गर्दैनौ। ३९ पवित्रशास्त्रहरूमा खोजी गर; किनकि
तिनैमा तिमीहरूका निम्ति अनन्त जीवन छ भनी
तिमीहरू सोच्दछौ, अनि मेरो विषयमा गवाही
दिने ती नै हुन्। ४० अनि तिमीहरू जीवन
पाउनालाई मकहाँ आउन इच्छुक छैनौ। ४१ म
मानिसहरूबाटको आदर ग्रहण गर्दिनँ। ४२ तर म
तिमीहरूलाई चिन्छु – तिमीहरूभित्र परमेश्वरको
प्रेम छैन। ४३ म मेरा पिताको नाममा आएको छु,
अनि तिमीहरू मलाई ग्रहण गर्दैनौ; अर्को आफ्नै
नाममा आयो भने त्यसलाई तिमीहरूले ग्रहण
गर्नेछौ। ४४ तिमीहरू, जो एक-अर्काबाट आदर
लिन्छौ, अनि परमेश्वरबाट मात्र आउने आदर-
चाहिँ खोज्दैनौ, त कसरी विश्वास गर्न सक्छौ?
४५ पिताको सामुन्ने म तिमीहरूलाई दोष लगाउँला
भनी नसोच; तिमीहरूलाई दोष लगाउने एकजना
छन् अर्थात् मोशा, जसमाथि तिमीहरूले भरोसा
राखेका छौ। ४६ किनभने तिमीहरूले मोशालाई
विश्वास गरेका हुँदा हौ ता तिमीहरूले मलाई
पनि विश्वास गर्नेथ्यौ; किनकि उनले मेरो
विषयमा लेखे। ४७ तर तिमीहरू उनका
लेखहरूलाई विश्वास गर्दैनौ भने मेरा
वचनहरूलाई कसरी विश्वास गरौला त?"

## येशूले पाँच हजारलाई खुवाउनुभयो

मत्ती १४:१५-२१; मर्कूस ६:३०-४४;
लूका ९:१०-१७

६ यी कुराहरूपछि येशू गालीलको समुद्र
अर्थात् तिबेरियास समुद्रको पारिपट्टि जानुभयो।
२ अनि एउटा ठूलो भीड़ उहाँको पछि लाग्यो;
किनकि उहाँले बिरामीहरूमाथि गर्नुभएको
उहाँका चिन्हहरूलाई तिनीहरूले देखे। ३ अनि
येशू एउटा पहाड़मा चढ्नुभयो, र त्यहाँ आफ्ना
चेलाहरूसँग बस्नुभयो। ४ अनि यहूदीहरूको
एउटा चाड़, निस्तार-चाड़ नजिकै थियो। ५ तब
येशूले आफ्ना आँखा उठाउनुभयो, अनि एउटा
ठूलो भीड़लाई आफूकहाँ आउँदै गरेको देखेर
उहाँले फिलिपलाई भन्नुभयो: "हामी कहाँबाट
रोटी किनौं, र यिनीहरूले खाऊन्?" ६ तर यो कुरा
उहाँले उनलाई जाँच गर्नका निम्ति भन्नुभएको
थियो; किनकि उहाँले जे गर्न लाग्नुभएको थियो,
सो उहाँलाई थाह थियो। ७ फिलिपले उहाँलाई
जवाफ दिए: "तिनीहरूमध्ये हरेकले थोरै-थोरै
लिए ता पनि दुई सय दीनारको* रोटी तिनीहरूका
निम्ति पर्याप्त हुँदैन।" ८ उहाँका चेलाहरूमध्ये
एकजना, शिमोन पत्रुसका दाजु अन्द्रियासले
उहाँलाई भने: ९ "यहाँ एउटा ठिटो छ, जससँग
पाँचओटा जौका रोटी र दुईटा ससाना माछा छन्,
तर यति धेरैका बीचमा ती के हुन् र?" १० अनि
येशूले भन्नुभयो: "मानिसहरूलाई बस्न लाओ।"

*६:७ एक दीनार एक दिनको ज्याला हो (मत्ती २०:२)

अब त्यस ठाउँमा धेरै घाँस थियो। यसकारण
गन्तीमा प्रायः पाँच हजार पुरुष बसे।
११ अनि येशूले रोटीहरू लिनुभयो, र
धन्यवाद दिएर उहाँले चेलाहरूलाई बाँड्नुभयो,
अनि चेलाहरूले चाहिँ बस्नेहरूलाई बाँडे; अनि
यही प्रकारले माछाहरूबाट जति तिनीहरूले चाह
गरे, त्यति बाँडे। १२ तिनीहरू अघाएपछि उहाँले
आफ्ना चेलाहरूलाई भन्नुभयोः "उब्रेका टुक्राहरू
बटुल, र एउटै पनि खेर नजाओस्।"
१३ यसकारण तिनीहरूले बटुले, र पाँचओटा
जौका रोटीका टुक्राहरूबाट बाह्रओटा डाला भरे,
जोचाहिँ खानेहरूले उबारेका थिए। १४ तब ती
मानिसहरूले येशूले गर्नुभएको चिन्ह देखेर भनेः
"यस संसारमा आउनुहुने भविष्यवक्ता साँच्चै
यहाँ नै हुनुहुँदो रहेछ।" १५ यसकारण आफूलाई
राजा बनाउनका निम्ति तिनीहरू आउन र आफू-
लाई जबर्जस्ती पक्रन लागेका छन् भन्ने कुरा थाह
पाएर येशू एकलै फेरि पहाड़तिर जानुभयो।

## प्रभु पानीमाथि हिँड्नुहुन्छ

मत्ती १४:२२-३३; मर्कूस ६:४५-५२

१६ अनि जब साँझ पर्‍यो, तब उहाँका
चेलाहरू समुद्रतिर झरे, १७ अनि डुङ्गामा चढ़ेर
समुद्रपारि कपर्नहुमतिर लागे। अनि अँध्यारो
भइसकेको थियो, अनि येशू तिनीहरूकहाँ
आउनुभएको थिएन। १८ अनि आँधीबेहरी
चलेको हुनाले समुद्र उर्लिन थाल्यो। १९ जब
तिनीहरू डुङ्गा खियाउँदै तीन-चार माइलजति
गएका थिए, तब तिनीहरूले येशूलाई समुद्र-
माथि हिँड्दै गर्नुभएको र डुङ्गाको नजिक-
नजिक आउँदै गर्नुभएको देखे; अनि तिनीहरू
डराए। २० तर उहाँले तिनीहरूलाई भन्नुभयोः
"मै हुँ, नडराओ।" २१ तब तिनीहरूले इच्छापूर्वक
उहाँलाई डुङ्गाभित्र ग्रहण गरे; अनि तुरुन्तै डुङ्गा
तिनीहरू गइरहेका ठाउँमा पुगिहाल्यो।

## स्वर्गबाट पठाइएको जीवनको रोटी

२२ भोलिपल्ट समुद्रको पारिपट्टिको
किनारमा उभिरहेका मानिसहरूले, उहाँका चेला-
हरू चढ़ेको डुङ्गाबाहेक अरू कुनै डुङ्गा त्यहाँ
नभएको, र येशू आफ्ना चेलाहरूसित डुङ्गाभित्र
नपस्नुभएको, तर उहाँका चेलाहरू मात्र त्यहाँबाट
गएका कुरा थाह पाए। २३ तरै पनि जहाँ प्रभुले
धन्यवाद दिनुभएपछि तिनीहरूले रोटी खाएका
थिए, त्यही ठाउँको नजिकमा तिबेरियासबाट अरू
डुङ्गाहरू आइपुगे; २४ यसकारण जब मानिस-
हरूले न येशूलाई, न ता उहाँका चेलाहरूलाई
त्यहाँ हुनुभएको देखे, तब तिनीहरू पनि डुङ्गा-
हरूमा चढ़े र येशूलाई खोज्दै कपर्नहुममा आए।
२५ अनि जब तिनीहरूले उहाँलाई समुद्रको
पारिपट्टि भेट्टाए, तब तिनीहरूले उहाँलाई भनेः
"रब्बी, तपाईं यहाँ कहिले आउनुभयो?"
२६ येशूले तिनीहरूलाई जवाफ दिएर भन्नुभयोः
"साँचो-साँचो म तिमीहरूलाई भन्दछु, तिमीहरू
चिन्हहरू देखेका हुनाले होइन, तर तिमीहरू
रोटीहरूबाट खाएर अघाएका हुनाले मलाई
खोज्दछौ। २७ नष्ट भइजाने भोजनका निम्ति
होइन, तर अनन्त जीवनसम्म रहिरहने भोजनका
निम्ति परिश्रम गर, जुनचाहिँ मानिसका पुत्रले
तिमीहरूलाई दिनेछन्; किनकि परमेश्वर पिताले
उनैमाथि छाप लाउनुभएको छ।" २८ तब
तिनीहरूले उहाँलाई भनेः "परमेश्वरका कामहरू
गर्नाका निम्ति हामी के गरौं?" २९ येशूले जवाफ
दिएर तिनीहरूलाई भन्नुभयोः "जसलाई उहाँले
पठाउनुभएको छ, उनैमाथि तिमीहरू विश्वास
गर; यही परमेश्वरको काम हो।" ३० यसकारण
तिनीहरूले उहाँलाई भनेः "तब तपाईं कुन चिन्ह
देखाउनुहुन्छ त, जसलाई हामी देख्न सकौं र
तपाईंलाई विश्वास गर्न सकौं? तपाईं के काम

गर्नुहुन्छ ? ३१ हाम्रा पिता-पुर्खाहरूले उजाड़-
स्थानमा मन्ना खाए, जस्तो लेखिएको छ, 'उहाँले
तिनीहरूलाई खानका निम्ति स्वर्गबाट रोटी
दिनुभयो।' ''*
३२ तब येशूले तिनीहरूलाई भन्नुभयो:
''साँचो-साँचो म तिमीहरूलाई भन्दछु, मोशाले
तिमीहरूलाई स्वर्गबाट त्यो रोटी दिएनन्, तर मेरा
पिताले तिमीहरूलाई स्वर्गबाट साँचो रोटी
दिनुहुन्छ। ३३ किनकि परमेश्वरको रोटी उनै हुन्,
जो स्वर्गबाट ओर्लेर आउँछन्, र संसारलाई जीवन
दिन्छन्।'' ३४ तब तिनीहरूले उहाँलाई भने:
''हजुर, यो रोटी हामीलाई सधैंभरि दिनुहोस्!''
३५ अनि येशूले तिनीहरूलाई भन्नुभयो:
''जीवनको रोटी म नै हुँ। जो मकहाँ आउँछ, ऊ
कहिल्यै भोकाउनेछैन; अनि जसले ममाथि
विश्वास गर्छ, ऊ कहिल्यै तिर्खाउनेछैन। ३६ तर
मैले तिमीहरूलाई भनें, तिमीहरूले मलाई देखेका
छौ र पनि विश्वास गर्दैनौ। ३७ पिताले मलाई
जतिजना दिनुहुन्छ, ती सबै मकहाँ आउनेछन्;
अनि जो मकहाँ आउँछ, उसलाई म कुनै रीतिले
अफाल्नेछैनँ। ३८ किनभने म आफ्नै इच्छा
होइन, तर मलाई पठाउनुहुनेको इच्छा पूरा गर्नका
निम्ति स्वर्गबाट ओर्ली आएको हुँ। ३९ अनि
मलाई पठाउनुहुने पिताको इच्छा यो छ – उहाँले
मलाई दिनुभएको सबैमध्ये एउटालाई पनि म
नहराऊँ, तर अन्तिम दिनमा त्यसलाई फेरि
बौराएर उठाऊँ। ४० अनि मलाई पठाउनुहुनेको
इच्छा यो छ – हरेक जन, जसले पुत्रलाई देख्छ
र उनीमाथि विश्वास गर्छ, उसले अनन्त जीवन
पाओस्; अनि म उसलाई अन्तिम दिनमा बौराएर
उठाउनेछु।''
४१ तब यहूदीहरूले उहाँको विषयमा गनगन
गरे; किनकि उहाँले भन्नुभयो, 'स्वर्गबाट ओर्ली
आएको रोटी म नै हुँ।' ४२ अनि तिनीहरूले भने:
''के यिनी यूसुफका छोरा येशू होइनन् र, जसका
बाबु र आमालाई हामी चिन्छौं ? तब यिनले कसरी
'म स्वर्गबाट ओर्ली आएको हुँ' भन्छन् त ?''
४३ यसकारण येशूले जवाफ दिएर तिनीहरूलाई
भन्नुभयो: ''तिमीहरू आपसमा गनगन नगर।
४४ मलाई पठाउनुहुने पिताले उसलाई नखिँचे-
सम्म कोही मानिस मकहाँ आउन सक्दैन; अनि म
उसलाई अन्तिम दिनमा बौराएर उठाउनेछु।
४५ भविष्यवक्ताहरूका पुस्तकमा लेखिएको छ,
'अनि उनीहरू सबै परमेश्वरद्वारा सिकाइएका
हुनेछन्।'* यसकारण हरेक जन, जसले पिताबाट
सुनेको र सिकेको छ, मकहाँ आउँछ। ४६ कुनै
मानिसले पितालाई देखेको छैन, उनले मात्र,
जोचाहिँ परमेश्वरबाटकै हुन् – उनले पितालाई
देखेका छन्। ४७ साँचो-साँचो म तिमीहरूलाई
भन्दछु, जसले ममाथि विश्वास गर्दछ, ऊसँग
अनन्त जीवन छ। ४८ जीवनको रोटी म नै हुँ।
४९ तिमीहरूका पितापुर्खाहरूले उजाड़स्थानमा
मन्ना खाए, अनि मरे। ५० यो त्यही रोटी हो, जो,
मानिसले यसबाट खाओस् र नमरोस् भनेर
स्वर्गबाट ओर्लेर आउँछ। ५१ त्यो जिउँदो रोटी
म नै हुँ, जो स्वर्गबाट ओर्लेर आयो; कसैले यस
रोटीबाट खायो भने ऊ सधैंभरि जिउनेछ; अनि
त्यो रोटीचाहिँ, जो म दिनेछु, मेरो मासु हो,
जसलाई म संसारको जीवनका निम्ति दिनेछु।''
५२ यसकारण यहूदीहरूले ''यस मानिसले
कसरी हामीलाई आफ्नो मासु खान दिन सक्छ ?''
भन्दै आपसमा झगड़ा गरे। ५३ तब येशूले
तिनीहरूलाई भन्नुभयो: ''साँचो-साँचो म तिमी-
हरूलाई भन्दछु, तिमीहरूले मानिसका पुत्रको
मासु खाएनौ र उनको रगत पिएनौ भने तिमीहरू
आफैमा जीवन छैन। ५४ जसले मेरो मासु खान्छ
र मेरो रगत पिउँछ, ऊसँग अनन्त जीवन छ, अनि
अन्तिम दिनमा म उसलाई बौराएर उठाउनेछु।
५५ किनकि मेरो मासु साँच्चै खानेकुरा हो, र मेरो

*६:३१ भजनसंग्रह ७८:२४; *६:४५ यशैया ५४:१३

रगत साँच्चै पिउने कुरा हो। ५६ जसले मेरो मासु
खान्छ र मेरो रगत पिउँछ, ऊ ममा रहन्छ, अनि
म उसमा। ५७ जसरी जीवित पिताले मलाई
पठाउनुभयो, र म पिताद्वारा जिउँछु, उसरी नै
जसले मलाई खान्छ, ऊ पनि मद्वारा जिउनेछ।
५८ योचाहिँ त्यो रोटी हो, जो स्वर्गबाट ओर्लेर
आयो, जसरी तिमीहरूका पितापुर्खाहरूले मन्ना
खाए र मरे, त्यस्तो होइन; जसले यस रोटीबाट
खान्छ, ऊ सधैंभरि जिउनेछ।'' ५९ यी कुराहरू
उहाँले कपर्नहुममा शिक्षा दिनुहुँदा सभाघरमा
भन्नुभयो।

## धेरै चेलाहरूले प्रभुलाई छोड्छन्

६० यसकारण उहाँका चेलाहरूमध्ये धेरैले
यो सुनेर भने: ''यो कठोर वचन हो, कसले
यसलाई सुन्न सक्छ र?'' ६१ तर यस विषयमा
आफ्ना चेलाहरू गनगनाए भनी आफ्नो मनमा थाह
पाएर येशूले तिनीहरूलाई भन्नुभयो: ''के यस
कुराले तिमीहरूलाई ठेस लाग्छ? ६२ तिमीहरूले
मानिसका पुत्रलाई पहिले उनी जहाँ थिए, त्यतैतिर
उक्लँदै गइरहेका देख्यौ भने नि, कसो?
६३ आत्माले पो जीवित पार्नुहुन्छ; शरीरले* केही
फाइदा दिँदैन; जुन वचनहरू म तिमीहरूलाई
भन्दछु, ती आत्मा हुन्, र जीवन हुन्। ६४ तर
तिमीहरूमध्ये कतिजना छन्, जसले विश्वास
गर्दैनन्।'' किनभने विश्वास नगर्नेहरू को-को
हुन्, अनि उहाँलाई पक्राउने को हुनेछ, सो येशूले
शुरुदेखि नै जान्नुभएको थियो। ६५ अनि उहाँले
भन्नुभयो: ''यसैकारण मैले 'मेरा पिताबाट
उसलाई नदिइएसम्म कोही पनि मकहाँ आउन
सक्दैन' भनी तिमीहरूलाई भनेको हुँ।''

६६ त्यस समयदेखि उहाँका चेलाहरूमध्ये
धेरैजना पछि हटे, अनि फेरि उहाँसँग हिँड़ेनन्।
६७ तब येशूले ती बाह्रजनालाई भन्नुभयो: ''के
तिमीहरू पनि जान चाहन्छौ?'' ६८ तब शिमोन
पत्रुसले उहाँलाई जवाफ दिए: ''हे प्रभु, हामी
कसकहाँ जाऔं? अनन्त जीवनका वचनहरू
ता तपाईंसँग छन्। ६९ अनि तपाईं जीवित
परमेश्वरका पुत्र 'ख्रीष्ट' हुनुहुन्छ भनी हामीले
विश्वास गरेका छौं, र पक्का गरी जानेका छौं।''
७० येशूले तिनीहरूलाई जवाफ दिनुभयो: ''के
मैले तिमीहरू बाह्रजनालाई चुनिनँ र? तर
तिमीहरूमध्ये एकजना शैतान हो।'' ७१ उहाँले
शिमोनको छोरो यहूदा इस्करयोतीको विषयमा
भन्नुभयो, किनभने बाह्रजनामध्ये एकजना भएर
पनि उहाँलाई पक्राउने त्यही थियो।

## झुपड़ी-चाड़मा येशू र उहाँका भाइहरू

७ यी कुराहरूपछि येशू गालीलमा
घुमिरहनुभयो; किनकि उहाँ यहूदियामा घुम्न
चाहनुभएन; किनभने यहूदीहरूले उहाँलाई मार्न
खोजिरहेका थिए। २ अब यहूदीहरूको झुपड़ी-
चाड़* नजिकै थियो। ३ यसकारण उहाँका
भाइहरूले उहाँलाई भने: ''यहाँबाट निस्कनुहोस्
अनि यहूदिया जानुहोस्, र तपाईंका चेलाहरूले
पनि ती कामहरू, जो तपाईं गर्नुहुन्छ, देखून्।
४ किनभने खुल्लमखुल्ला जानिने इच्छा राखेर
पनि गुप्तमा काम गर्ने कुनै मानिस छैन। यदि तपाईं
यी कुराहरू गर्नुहुन्छ भने आफैलाई संसारकहाँ
प्रकट गर्नुहोस्।'' ५ किनभने उहाँकै भाइहरूले
पनि उहाँमा विश्वास गर्दैनथे। ६ तब येशूले
तिनीहरूलाई भन्नुभयो: ''मेरो समय अझै आएको
छैन, तर तिमीहरूको समयचाहिँ जहिले पनि
तयार छ। ७ संसारले तिमीहरूलाई घृणा गर्न
सक्दैन; तर मलाई चाहिँ घृणा गर्दछ; किनकि
त्यसका कामहरू दुष्ट छन् भनी म त्यसको
विषयमा गवाही दिन्छु। ८ तिमीहरू यस चाड़मा

*६:६३ अक्षरशः 'मासुले'; *७:२ लेवी २३:३३-४४

जाओ, म अहिले यस चाड़मा जान्नँ; किनकि मेरो
समय अझै पूरा भएको छैन।" ९ तिनीहरूलाई
यी कुराहरू भन्नुभएपछि उहाँचाहिँ गालीलमा
रहनुभयो। १० तर जब उहाँका भाइहरू माथि
गए, तब उहाँ पनि, खुल्लमखुल्ला होइन, तर
गुप्तमा झैं गरी माथि चाड़मा जानुभयो। ११ तब
चाड़मा यहूदीहरूले उहाँलाई खोजे र भने:
"तिनी कहाँ छन्?" १२ अनि उहाँको विषयमा
मानिसहरूका बीचमा धेरै गुनगुनाइ भइरहेको
थियो; किनभने कोही भन्थे: "तिनी असल छन्,"
अरूले भन्थे: "होइन, तर तिनले मानिसहरूलाई
धोका दिन्छन्।" १३ तरै पनि यहूदीहरूको डरले
गर्दा कसैले पनि उहाँको विषयमा खुल्लमखुल्ला
कुरा गरेन।

१४ अब चाड़ आधा-आधी हुन लाग्दा येशू
उक्लेर मन्दिरभित्र पस्नुभयो, र शिक्षा दिनुभयो।
१५ अनि यहूदीहरू यसो भन्दै अचम्म मानिरहेका
थिए: "कहिल्यै नपढ़ीकन पनि यस मानिसले
कसरी विद्या जान्दछन्?" १६ येशूले तिनीहरूलाई
जवाफ दिएर भन्नुभयो: "मेरो शिक्षा मेरो होइन, तर
उहाँको हो, जसले मलाई पठाउनुभयो। १७ यदि
कसैले उहाँको इच्छा पालन गर्न चाहन्छ भने यस
शिक्षाको विषयमा, योचाहिँ परमेश्वरबाटकै हो
कि म आफ्नैपट्टिबाट बोल्दछु, सो उसले थाह
पाउनेछ। १८ जसले आफ्नैपट्टिबाट बोल्छ,
त्यसले आफ्नै महिमा खोज्छ; तर जसले
आफूलाई पठाउनुहुनेको महिमा खोज्छन्, उनी
नै सत्य हुन्, र उनमा कुनै अधर्म छैन। १९ के
मोशाले तिमीहरूलाई व्यवस्था दिएनन् र? अनि
तिमीहरूमध्ये एउटाले पनि व्यवस्था पालन
गर्दैन। तिमीहरू किन मलाई मार्न खोज्छौ?"
२० मानिसहरूले जवाफ दिएर भने: "तिमीसँग
दुष्ट आत्मा छ! कसले तिमीलाई मार्न खोज्छ
र?" २१ येशूले जवाफ दिएर तिनीहरूलाई
भन्नुभयो: "मैले एउटा काम गरें, अनि तिमीहरू
सबै छक्क पर्दछौ। २२ यसैकारण मोशाले
तिमीहरूलाई खतना दिए; (यो मोशाबाट होइन,
तर पिता-पुर्खाबाटै हो); अनि तिमीहरू विश्राम-
दिनमा मान्छेको खतना गर्दछौ। २३ मोशाको
व्यवस्था भङ्ग नहोस् भनेर विश्रामदिनमा मान्छेले
खतना गराउँछ भने विश्रामदिनमै मैले एकजना
मानिसलाई बिलकुलै निको पारेकोमा के तिमीहरू
मसँग रिसाउँछौ? २४ मुख हेरेर न्याय नगर,
तर धर्ममय न्यायले न्याय गर।" २५ तब
यरूशलेमीहरूमध्ये कतिले भने: "के यिनी तिनी
नै होइनन्, जसलाई तिनीहरूले मार्न खोज्दछन्?
२६ तर हेर त, यिनी खुल्लमखुल्ला बोल्दछन्,
अनि तिनीहरू यिनलाई केही पनि भन्दैनन्।
यिनी वास्तवमा ख्रीष्ट हुन् भनेर के शासकहरूले
साँच्ची नै थाह पाए त? २७ तैपनि यिनी
कहाँबाटका मानिस हुन्, हामीलाई थाह छ; तर
जब ख्रीष्ट आउनुहुन्छ, तब उहाँ कहाँबाटका
हुनुहुन्छ, कसैलाई पनि थाह हुँदैन।"

२८ तब मन्दिरमा शिक्षा दिँदै गर्नुहुँदा
येशूले कराएर यसो भन्नुभयो: "तिमीहरू मलाई
चिन्दछौ, र म कहाँको हुँ, त्यो पनि जान्दछौ;
अनि म आफ्नैपट्टिबाट आएको होइनँ, तर मलाई
पठाउनुहुने सत्य हुनुहुन्छ, जसलाई तिमीहरू
चिन्दैनौ। २९ तर म उहाँलाई चिन्छु; किनकि म
उहाँबाटको हुँ, र उहाँले मलाई पठाउनुभएको
हो।" ३० तब तिनीहरूले उहाँलाई पक्रन खोजे;
तर कसैले उहाँमाथि हात हालेन; किनकि
उहाँको समय अझै आइपुगेको थिएन। ३१ अनि
मानिसहरूमध्ये धेरैले उहाँमाथि विश्वास गरे, र
भने: "जब ख्रीष्ट आउनुहुन्छ, तब के यी मानिसले
गर्नुभएको चिन्हहरूभन्दा बढ़ी उहाँले गर्नुहुनेछ
र?" ३२ उहाँको विषयमा मानिसहरूले यस्ता
कुराहरू गुनगुनाइरहेका फरिसीहरूले सुने, अनि
फरिसीहरू र मुख्य पूजाहारीहरूले उहाँलाई
पक्रनका निम्ति अफिसरहरू पठाए। ३३ तब

येशूले तिनीहरूलाई भन्नुभयोः "अझै केही
समयसम्म म तिमीहरूसँग हुन्छु, अनि म मलाई
पठाउनुहुनेकहाँ जान्छु। ३४ तिमीहरूले मलाई
खोज्नेछौ, र मलाई भेट्टाउनेछैनौ; अनि जहाँ म
छु, त्यहाँ तिमीहरू आउन सक्दैनौ।" ३५ तब
यहूदीहरूले आपसमा भनेः "यिनी कहाँ जान
लागेका छन्, र हामी यिनलाई भेट्टाउनेछैनौं? के
यिनी अन्यजातिहरूका बीचमा छरिएकाहरूकहाँ
जान र अन्यजातिहरूलाई शिक्षा दिन लागेका
छन्? ३६ यिनले भनेको यो कुरा के हो –
'तिमीहरूले मलाई खोज्नेछौ, र मलाई भेट्टाउने-
छैनौ, अनि जहाँ म छु, त्यहाँ तिमीहरू आउन
सक्दैनौ?'"

३७ अन्तिम दिनमा, चाड़को मुख्य दिनमा
येशू उभिनुभयो र यसो भन्दै कराउनुभयोः "कोही
तिर्खाउँछ भने ऊ मकहाँ आओस् र पिओस्!
३८ जसले ममाथि विश्वास गर्छ, पवित्रशास्त्रले
भनेअनुसार, उसको हृदयबाट* जिउँदो पानीका
नदीहरू बहनेछन्!" ३९ तर यो कुरा उहाँले
आत्माको विषयमा भन्नुभयो, जसलाई उहाँमाथि
विश्वास गर्नेहरूले पाउन लागेका थिए; किनकि
पवित्र आत्मा अझैसम्म दिइनुभएको थिएन;
किनभने येशू अझै महिमित हुनुभएको थिएन।

## येशू नै ख्रीष्ट हुनुहुन्छ भन्ने विषयमा तर्क

४० यसकारण मानिसहरूमध्ये धेरैले यो
कुरा सुनेर भनेः "साँच्चै यहाँ नै ती भविष्यवक्ता
हुनुहुन्छ।" ४१ अरूले भनेः "यहाँ नै 'ख्रीष्ट'
हुनुहुन्छ।" तर कतिले भनेः "के ख्रीष्ट गालील-
बाट आउनुहुनेछ र? ४२ ख्रीष्ट दाऊदको
वंशबाट र बेथलेहेम गाउँबाट, जहाँ दाऊद थिए,
आउनुहुन्छ भनेर के पवित्रशास्त्रले भनेको छैन
र?" ४३ यसकारण उहाँको कारणले मानिस-
हरूको बीचमा फाटो भयो। ४४ अनि तिनी-
हरूमध्ये कतिले उहाँलाई पक्रन चाहे, तर
कसैले पनि उहाँमाथि हात हालेन। ४५ तब ती
अफिसरहरू मुख्य पूजाहारीहरू र फरिसीहरू-
कहाँ आए, अनि तिनीहरूले उनीहरूलाई भनेः
"तिमीहरूले उसलाई किन ल्याएनौ?" ४६ ती
अफिसरहरूले जवाफ दिएः "यस मानिसले
जस्तो ता कुनै मान्छेले कहिल्यै बोलेको छैन।"
४७ तब फरिसीहरूले उनीहरूलाई जवाफ दिएः
"के तिमीहरू पनि ठगियौ? ४८ के शासकहरू
वा फरिसीहरूमध्ये कसैले उसमाथि विश्वास
गरेको छ र? ४९ तर व्यवस्था नजान्ने यी
मानिसहरू श्रापित छन्।" ५० निकोदेमसले (जो
येशूकहाँ राती आएका थिए, जो तिनीहरूमध्ये
एक थिए) तिनीहरूलाई भनेः ५१ "के हाम्रो
व्यवस्थाले कुनै मानिसलाई, उसको कुरा पहिले
नसुनीकन र उसले के गर्दछ, सो नजानीकन
न्याय गर्छ र?" ५२ तिनीहरूले जवाफ दिएर
उनलाई भनेः "के तिमी पनि गालीलकै हौ?
खोजी गर, र हेर; किनकि गालीलबाट कुनै
भविष्यवक्ता निस्किँदैन।" ५३ अनि हरेक मानिस
आ-आफ्नो घर गयो।

## व्यभिचारमा पक्राउ परेकी स्त्री

८ तर येशू जैतुन-डाँड़ामा जानुभयो। २ अनि
एकाबिहानै उहाँ फेरि मन्दिरभित्र आउनुभयो,
अनि सबै मानिसहरू उहाँकहाँ आए; अनि उहाँ
बस्नुभयो, र तिनीहरूलाई शिक्षा दिनुभयो।
३ अनि शास्त्री र फरिसीहरूले एउटी व्यभिचारमा
पक्रिएकी स्त्रीलाई उहाँकहाँ ल्याए; अनि त्यसलाई
बीचमा उभ्याएर ४ तिनीहरूले उहाँलाई भनेः "हे
गुरुज्यू, यो स्त्री व्यभिचार गर्दा गर्दै पक्राउ परेकी
हो। ५ अब यस्ताहरू ढुङ्गाले हानिनुपर्छ भनी
मोशाले हामीलाई व्यवस्थामा आज्ञा गरेका छन्,

*७:३८ ग्रीकमा 'पेटबाट'

तर तपाईं नि, के भन्नुहुन्छ?" ६ तर तिनीहरूले
उहाँलाई परीक्षा गर्दै उहाँलाई दोष लाउनका निम्ति
केही कुरा पाइन्छ कि भनी भनेका थिए। तर
येशूले मानो केही सुन्नुभएकै छैन जस्तो गरी निहुरेर
आफ्नो औंलाले भुइँमा लेख्नुभयो। ७ तर जब
तिनीहरूले उहाँलाई सोधेका-सोधेकै गरे, तब
उहाँले आफूलाई सोझो पारेर तिनीहरूलाई
भन्नुभयो: "तिमीहरूमध्ये जो पापरहित छ, त्यसैले
पहिले त्यसलाई ढुङ्गाले हानोस्।" ८ अनि फेरि
उहाँले निहुरेर भुइँमा लेख्नुभयो। ९ अनि ज-
जसले यो कुरा सुने, तिनीहरू आफ्नै विवेकद्वारा
दोषी ठहरिएर ठूलोबाट शुरु गरेर सानैसम्म
एक-एक गर्दै बाहिर गए; अनि येशू एक्लै
छोड्नुभयो, र बीचमा उभिरहेकी त्यो स्त्री।
१० जब येशूले आफूलाई सोझो पार्नुभयो, अनि
त्यस स्त्रीबाहेक अरू कसैलाई देख्नुभएन, तब
उहाँले त्यसलाई भन्नुभयो: "हे नारी, तिमीलाई दोष
लाउनेहरू कहाँ छन्? कसैले तिमीलाई दोषी
ठहराएन?" ११ त्यसले भनी: "कसैले पनि
ठहराएन, प्रभु!" अनि येशूले त्यसलाई भन्नुभयो:
"म पनि तिमीलाई दोषी ठहराउँदिनँ; जाऊ,र
अबदेखि पाप नगर।"

## प्रभु येशू – संसारको ज्योति

१२ तब फेरि येशूले यसो भन्दै तिनीहरूसँग
बोल्नुभयो: "संसारको ज्योति म नै हुँ; जसले
मलाई पछ्याउँछ, ऊ अन्धकारमा हिँड्नेछैन,
तर जीवनको ज्योति पाउनेछ।" १३ यसकारण
फरिसीहरूले उहाँलाई भने: "तिमी आफ्नै
विषयमा गवाही दिन्छौ; तिम्रो गवाही सत्य छैन।"
१४ येशूले जवाफ दिएर तिनीहरूलाई भन्नुभयो:
"मैले आफ्नो विषयमा गवाही दिए तापनि मेरो
गवाही सत्य छ; किनकि म कहाँबाट आएँ, र कहाँ
जान्छु, सो म जान्दछु; तर म कहाँबाट आएको हुँ,
र कहाँ जान्छु, सो तिमीहरू जान्दैनौ। १५ तिमीहरू
शरीरअनुसार न्याय गर्दछौ; म कसैको न्याय
गर्दिनँ। १६ अनि मैले न्याय गरें भने पनि मेरो
न्याय सत्य हुन्छ; किनकि म एक्लो छैनँ, तर म
र मलाई पठाउनुहुने पिता छौं। १७ तिमीहरूको
व्यवस्थामा पनि 'दुई मानिसहरूको गवाही सत्य
हुन्छ'* भनी लेखिएको छ। १८ एक म नै हुँ,
जसले आफ्नै विषयमा गवाही दिन्छ, अनि मलाई
पठाउनुहुने पिता, जसले मेरो विषयमा गवाही
दिनुहुन्छ।" १९ तब तिनीहरूले उहाँलाई भने:
"तिम्रा पिता कहाँ छन्?" येशूले जवाफ
दिनुभयो: "तिमीहरू न ता मलाई चिन्छौ, न मेरा
पितालाई। तिमीहरूले मलाई चिनेका भए मेरा
पितालाई पनि चिन्नेथियौ।"

२० यी कुराहरू येशूले मन्दिरमा शिक्षा
दिनुहुँदा ढुकुटीमा भन्नुभयो, अनि कसैले पनि
उहाँमाथि हात हालेन; किनकि उहाँको समय अझै
आइपुगेको थिएन। २१ तब येशूले तिनीहरूलाई
फेरि भन्नुभयो: "म जान्छु, अनि तिमीहरूले मलाई
खोज्नेछौ, र आफ्ना पापहरूमा मर्नेछौ। जहाँ म
जान्छु, त्यहाँ तिमीहरू आउन सक्दैनौ।"
२२ यसकारण यहूदीहरूले भने: "के उसले
आफैलाई मार्ला त? किनभने उसले 'जहाँ म
जान्छु, त्यहाँ तिमीहरू आउन सक्दैनौ' भन्छ।"
२३ अनि उहाँले तिनीहरूलाई भन्नुभयो: "तिमीहरू
तलबाटका हौ; म माथिबाटको हुँ। तिमीहरू यस
संसारका हौ; मचाहिँ यस संसारको होइनँ।
२४ यसकारण मैले तिमीहरूलाई भनें: 'तिमीहरू
आफ्ना पापहरूमा मर्नेछौ'; किनभने 'म उही हुँ'
भनी तिमीहरूले विश्वास गरेनौ भने तिमीहरू
आफ्ना पापहरूमा मर्नेछौ।" २५ तब तिनीहरूले
उहाँलाई भने: "तिमी को हौ त?" अनि येशूले
तिनीहरूलाई भन्नुभयो: "म उही हुँ, जो मैले
शुरुदेखि नै तिमीहरूलाई भनिरहेको छु।

*८:१७ व्यवस्था १७:६; १९:१५

२६ तिमीहरूका विषयमा भन्न र न्याय गर्न मसँग
धेरै कुराहरू छन्; तर जसले मलाई पठाउनुभयो,
उहाँ सत्य हुनुहुन्छ; अनि मैले उहाँबाट जे सुनें,
ती कुराहरू म संसारलाई भन्दछु।" २७ उहाँले
तिनीहरूलाई पिताको विषयमा भन्नुभएको हो भनी
तिनीहरूले बुझेनन्। २८ तब येशूले तिनीहरूलाई
भन्नुभयो: "जब तिमीहरूले मानिसका पुत्रलाई
माथि उचालौला, तब म उही रहेछु र आफ्नो-
पट्टिबाट केही गर्दिनँ रहेछु, तर मेरा पिताले मलाई
सिकाउनुभएअनुसार म यी कुराहरू बोल्दो रहेछु
भनी तिमीहरूले थाह पाउनेछौ। २९ अनि जसले
मलाई पठाउनुभयो, उहाँ मसँग हुनुहुन्छ। पिताले
मलाई एकलो छोड्नुभएको छैन; किनकि
उहाँलाई खुशी पार्ने कुराहरू म सधैं गर्दछु।"
३० उहाँले यी कुराहरू गर्नुहुँदा धेरैले उहाँमाथि
विश्वास गरे।

## अब्राहामका सन्तान र शैतानका सन्तान

३१ तब येशूले आफूलाई विश्वास गर्ने ती
यहूदीहरूलाई भन्नुभयो: "तिमीहरू मेरो वचनमा
लागिरह्यौ भने तिमीहरू साँच्चै मेरा चेला हौ।
३२ अनि तिमीहरूले सत्यलाई जान्नेछौ, र सत्यले
तिमीहरूलाई स्वतन्त्र गराउनेछ।" ३३ तिनीहरूले
उहाँलाई जवाफ दिए: "हामी ता अब्राहामका
सन्तान हौं, अनि कहिल्यै कसैको बन्धनमा
परेका छैनौं; त कसरी तपाईंले 'तिमीहरू स्वतन्त्र
पारिनेछौ' भनी भन्नुहुन्छ?" ३४ येशूले तिनी-
हरूलाई जवाफ दिनुभयो: "साँचो-साँचो म
तिमीहरूलाई भन्दछु, जसले पाप गर्छ, त्यो
पापको दास हो। ३५ अनि दास घरमा सधैंभरि
रहँदैन, तर पुत्र सधैंभरि रहन्छन्। ३६ यसकारण
पुत्रले तिमीहरूलाई स्वतन्त्र पारे भने तिमीहरू
साँच्चै स्वतन्त्र हुनेछौ। ३७ म जान्दछु, तिमीहरू
अब्राहामका सन्तान हौ, तर तिमीहरू मलाई मार्न
खोज्छौ; किनभने तिमीहरूभित्र मेरा वचनका
लागि कुनै ठाउँ छैन। ३८ मैले मेरा पिताकहाँ जे
देखेको छु, त्यही बोल्दछु; अनि तिमीहरूले चाहिँ
आफ्नो पिताकहाँ जे देखेका छौ, त्यही गर्दछौ।"
३९ तिनीहरूले जवाफ दिएर उहाँलाई भने:
"अब्राहाम हाम्रा पिता हुनुहुन्छ।" येशूले तिनी-
हरूलाई भन्नुभयो: "तिमीहरू अब्राहामका सन्तान
हुँदा हौ ता अब्राहामकै कामहरू गर्नेथियौ।
४० तर अब तिमीहरू ता मलाई मार्न खोज्छौ —
एउटा मानिसलाई, जसले तिमीहरूलाई सत्य कुरा
बताएका छन्, जुनचाहिँ मैले परमेश्वरबाट
सुनेको छु; यो ता अब्राहामले गरेनन्।
४१ तिमीहरू आफ्ना पिताका कामहरू गर्दछौ।"
तब तिनीहरूले उहाँलाई भने: "हामी व्यभिचार-
बाट जन्मेका होइनौं; हाम्रा एउटै पिता हुनुहुन्छ
अर्थात् परमेश्वर!" ४२ येशूले तिनीहरूलाई
भन्नुभयो: "परमेश्वर तिमीहरूका पिता हुनुभएको
भए तिमीहरूले मलाई प्रेम गर्नेथ्यौ; किनभने
म परमेश्वरबाट निस्कें र आएँ; म आफैबाट
आएको होइनँ, तर उहाँले मलाई पठाउनुभयो।
४३ तिमीहरू किन मेरो कुरा बुझ्दैनौ? किनभने
तिमीहरू मेरो वचन सुन्न सक्दैनौ। ४४ तिमीहरू
आफ्ना बाबु शैतानबाटका हौ, अनि आफ्नै
बाबुका कुइच्छाहरू पूरा गर्न चाहन्छौ। त्यो
शुरुदेखि नै हत्यारा थियो, अनि सत्यमा रहेन;
किनकि त्यसमा सत्य छँदै छैन। जब त्यसले
झूट बोल्दछ, तब त्यो आफ्नैतर्फबाट बोल्दछ;
किनकि त्यो झूट हो, र झूटको बाबु हो। ४५ तर
मैले सत्य बोलेको हुनाले तिमीहरू मलाई
विश्वास गर्दैनौ। ४६ तिमीहरूमध्ये कसले मलाई
पापको विषयमा दोषी ठहराउँछ? तर म सत्य
बोल्दछु भने तिमीहरू मलाई किन विश्वास
गर्दैनौ? ४७ जो परमेश्वरबाटको हो, उसले
परमेश्वरका वचनहरू सुन्छ; यसैकारण तिमीहरू
सुन्दैनौ, किनभने तिमीहरू परमेश्वरबाटका

होइनौ।" ४८ तब यहूदीहरूले जवाफ दिएर
उहाँलाई भनेः "तिमी सामरी हौ, अनि तिमीसँग
दुष्ट आत्मा छ भनेर के हामी ठीक भन्दैनौं र?"
४९ येशूले जवाफ दिनुभयोः "मसँग दुष्ट आत्मा
छैन; तर म मेरा पितालाई आदर गर्छु, अनि
तिमीहरू मलाई अनादर गर्छौ। ५० तर म आफ्नै
महिमा खोज्दिनँ; खोज्ने र न्याय गर्ने एकजना
हुनुहुन्छ। ५१ साँचो-साँचो म तिमीहरूलाई
भन्दछु, कसैले मेरो वचन पालन गर्छ भने उसले
कहिल्यै मृत्यु देख्नेछैन।" ५२ तब यहूदीहरूले
उहाँलाई भनेः "तिमीसँग दुष्ट आत्मा नै रहेछ
भनेर अब हामी जान्दछौं। अब्राहाम र भविष्य-
वक्ताहरू मरे; तर तिमीचाहिँ भन्दछौ, 'कसैले
मेरो वचन पालन गर्छ भने उसले कहिल्यै मृत्यु
चाख्नेछैन।' ५३ के तिमी हाम्रा पिता अब्राहाम-
भन्दा ठूला हौ, जो मरिगए? अनि भविष्य-
वक्ताहरू पनि मरिगए; तिमी आफूलाई चाहिँ को
तुल्याउँछौ?" ५४ येशूले जवाफ दिनुभयोः
"आफैलाई म आदर गर्छु भने मेरो आदर केही
पनि होइन; मलाई आदर गर्नुहुने ता मेरा पिता पो
हुनुहुन्छ, जसको विषयमा तिमीहरू 'उहाँ हाम्रा
परमेश्वर हुनुहुन्छ' भनी भन्दछौ। ५५ अझै पनि
तिमीहरूले उहाँलाई चिनेका छैनौ, तर म उहाँलाई
चिन्छु; अनि मैले 'म उहाँलाई चिन्दिनँ' भनें
भने म पनि तिमीहरूजस्तै झूट हुनेछु; तर म
उहाँलाई चिन्छु, र उहाँको वचन पालन गर्छु।
५६ तिमीहरूका पिता अब्राहाम मेरो दिन देख्ने
आशामा हर्षित थिए, अनि उनले देखे र आनन्दित
भए।" ५७ तब यहूदीहरूले उहाँलाई भनेः "तिमी
अझै पचास वर्ष पुगेका छैनौ, अनि के तिमीले
अब्राहामलाई देखेका छौ र?" ५८ येशूले
तिनीहरूलाई भन्नुभयोः "साँचो-साँचो म तिमी-
हरूलाई भन्दछु, अब्राहाम हुनुभन्दा पहिले म
हुँ।" ५९ तब तिनीहरूले उहाँलाई हान्नलाई
ढुङ्गाहरू टिपे; तर येशू लुक्नुभयो, र तिनीहरूकै
बीचबाट भएर मन्दिरबाट बाहिर जानुभयो,
अनि यसरी निस्कनुभयो।

## जन्मकै अन्धा निको पारियो

९ अनि येशूले जाँदै गर्नुहुँदा एउटा
जन्मैदेखिको अन्धा मानिसलाई देख्नुभयो।
२ अनि उहाँका चेलाहरूले उहाँलाई यसो भन्दै
सोधेः "हे रब्बी, कसले पाप गरेकोले यो मान्छे
अन्धा जन्मेको हो? यसले कि यसका बाबु-
आमाले?" ३ येशूले जवाफ दिनुभयोः "न ता
यस मानिसले, न यसका बाबुआमाले नै पाप गरे,
तर परमेश्वरका कामहरू यसमा प्रकट होऊन्
भनी भएको हो। ४ दिन हुँदा-हुँदै मैले मलाई
पठाउनुहुनेका कामहरू गरिहाल्नुपर्छ; रात आउँछ,
तब कसैले काम गर्न सक्दैन। ५ जबसम्म म
संसारमा छु, तबसम्म म संसारको ज्योति हुँ।"
६ यी कुराहरू भनेपछि उहाँले भुइँमा
थुक्नुभयो, अनि थुकबाट हिलो बनाउनुभयो, र
अन्धा मानिसका आँखाहरूमा हिलो घसि-
दिनुभयो। ७ अनि उसलाई भन्नुभयोः "जाऊ,
सिलोआमको (जसको अर्थ हो, पठाइएको)
तलाउमा धोऊ।" यसकारण ऊ गयो र धोयो,
अनि देख्ने भएर आयो। ८ यसकारण छिमेकी-
हरूले र उसलाई पहिले अन्धा भएको देख्नेहरूले
भनेः "के बसेर भीख माग्ने यही होइन र?"
९ कतिले भनेः "यो त्यही हो।" अरूले भनेः "यो
त्योजस्तै छ।" तर उसले भन्योः "म उही हुँ।"
१० यसकारण तिनीहरूले उसलाई भनेः "तिम्रा
आँखाहरू कसरी खोलिए?" ११ उसले जवाफ
दिएर भन्योः "येशू भनिनुहुने मानिसले हिलो
बनाएर मेरा आँखाहरूमा घसिदिनुभयो, र मलाई
भन्नुभयो, 'सिलोआमको तलाउमा जाऊ, र
धोऊ।' अनि म गएँ, र धोएँ, र देख्ने भएँ।"
१२ तब तिनीहरूले उसलाई भनेः "उनी कहाँ
छन्?" उसले भन्योः "मलाई थाह छैन।"

१३ तिनीहरूले उसलाई, जो पहिले अन्धा
थियो, फरिसीहरूकहाँ ल्याए। १४ अनि येशूले
हिलो बनाएर उसका आँखाहरू खोल्नुभएको
दिनचाहिँ विश्रामदिन थियो। १५ तब फरिसी-
हरूले पनि, "तँ कसरी देख्ने भइस् ?" भनी फेरि
उसलाई सोधे। उसले तिनीहरूलाई भन्योः
"उहाँले मेरा आँखाहरूमा हिलो लाइदिनुभयो,
अनि मैले धोएँ, र म देख्छु।" १६ यसकारण
फरिसीहरूमध्ये कतिले भनेः "त्यो मानिस
परमेश्वरबाटको होइन, किनभने त्यसले विश्राम-
दिन पालन गर्दैन।" अरूले भनेः "कसरी
मानिसले, पापी भएर यस्ता चिन्हहरू गर्न सक्छ
र?" अनि तिनीहरूका बीचमा फाटो भयो।
१७ तिनीहरूले त्यस अन्धा मानिसलाई फेरि भनेः
"उसले तेरा आँखा खोलिदिएकोमा तँ उसको
विषयमा के भन्छस् ?" उसले भन्योः "उहाँ
भविष्यवक्ता हुनुहुन्छ।" १८ तर यहूदीहरूले
जबसम्म दृष्टि पाउने मानिसका बाबुआमालाई
बोलाएनन्, तबसम्म ऊ अन्धा थियो, अनि उसले
दृष्टि पायो भनी उसको विषयमा विश्वास
गरेनन्। १९ अनि तिनीहरूले उनीहरूलाई यसो
भन्दै सोधेः "के यो तिमीहरूको छोरो हो, जसलाई
तिमीहरू 'ऊ अन्धा जन्मेको थियो' भनी भन्छौ ?
तब कसरी उसले अहिले देख्छ त ?" २० उसका
बाबुआमाले तिनीहरूलाई जवाफ दिएर भनेः
"हामी जान्दछौं, यो हाम्रै छोरो हो, अनि यो अन्धै
जन्मेको थियो, २१ तर उसले अहिले कसरी
देख्छ, सो हामी जान्दैनौं, अथवा कसले उसका
आँखा खोलिदिए, सो हामी जान्दैनौं। ऊ उमेरदार
भइसकेको छ, उसैलाई सोध्नुहोस्; आफ्नो लागि
ऊ आफै बोल्नेछ।" २२ उसका बाबुआमाले यी
कुराहरू भने, किनकि उनीहरू यहूदीहरूसँग
डराउँथे; किनकि कसैले उनलाई 'ख्रीष्ट' हुन्
भनी स्वीकार गर्‍यो भने त्यो सभाघरबाट
निकालिनुपर्छ भनी यहूदीहरूले पहिल्यै आपसमा
मतो गरिसकेका थिए। २३ यसैकारण उसका
बाबुआमाले भने, 'ऊ उमेरदार भइसकेको छ,
उसैलाई सोध्नुहोस्।'

२४ तब तिनीहरूले त्यस मानिसलाई, जो
अन्धा थियो, फेरि बोलाए र उसलाई भनेः
"परमेश्वरलाई महिमा दे! हामी जान्दछौं, त्यो
मान्छे पापी हो!" २५ उसले जवाफ दिएर भन्योः
"उहाँ पापी हुनुहुन्छ कि हुनुहुन्न, म जान्दिनँ।
एउटा कुरा म जान्दछु – म अन्धा थिएँ, अब म
देख्दछु।" २६ अब तिनीहरूले फेरि उसलाई भनेः
"उसले तँलाई के गर्‍यो ? कसरी उसले तेरा आँखा
खोलिदियो ?" २७ उसले तिनीहरूलाई जवाफ
दियोः "मैले तपाईंहरूलाई अघि नै भनिहालें,
अनि तपाईंहरूले सुन्नुभएन। तपाईंहरू फेरि किन
सुन्न चाहनुहुन्छ ? के तपाईंहरू पनि उहाँका चेला
हुन चाहनुहुन्छ ?" २८ तब तिनीहरूले उसलाई
हप्काएर भनेः "तँ पो त्यसको चेला होस्! तर
हामी मोशाका चेला हौं! २९ हामी जान्दछौं,
परमेश्वर मोशासँग बोल्नुभयो; तर यो मान्छे ता
कुन्नि कहाँबाटको हो, हामी जान्दैनौं।" ३० त्यस
मानिसले जवाफ दिएर तिनीहरूलाई भन्योः
"किन! यसैमा त अचम्मको कुरा छ! उहाँ
कहाँबाटको हुनुहुन्छ, तपाईंहरू जान्नुहुन्न; तरै पनि
उहाँले मेरा आँखा खोलिदिनुभएको छ। ३१ तर
हामीलाई थाह छ, परमेश्वरले पापीहरूको
सुन्नुहुन्न; तर कसैले परमेश्वरको डर मान्छ र
उहाँको इच्छा पालन गर्छ भने उहाँले उसको
सुन्नुहुन्छ। ३२ जन्मैको अन्धाका आँखा कसैले
खोलिदियो भन्ने कुरा संसारको शुरुदेखि यसो
सुनिएको छैन। ३३ यी मानिस परमेश्वरबाटका
नहुनुभएको भए उहाँले केही पनि गर्न सक्नु-
हुनेथिएन।" ३४ तिनीहरूले जवाफ दिएर उसलाई
भनेः "तँ ता बिलकुलै पापहरूमा जन्मेको होस्,
अनि के तँ हामीलाई सिकाउँछस् ?" अनि
तिनीहरूले उसलाई निकालिदिए।

३५ तिनीहरूले उसलाई निकालिदिए भनेर
येशूले सुन्नुभयो; अनि उहाँले उसलाई भेट्टाउनु-
भएपछि उसलाई भन्नुभयोः "के तिमी परमेश्वरका
पुत्रमाथि विश्वास गर्छौ?" ३६ उसले जवाफ
दिएर भन्योः "उहाँ को हुनुहुन्छ प्रभु, र म
उहाँमाथि विश्वास गरूँ?" ३७ अनि येशूले
उसलाई भन्नुभयोः "तिमीले उनलाई देखेका पनि
छौ, र तिमीसित बात गर्ने उनी नै हुन्।" ३८ अनि
उसले भन्योः "प्रभु, म विश्वास गर्छु!" अनि
उसले उहाँलाई दण्डवत् गर्‍यो। ३९ अनि येशूले
भन्नुभयोः "नदेख्नेहरूले देखून्, र देख्नेहरूचाहिँ
अन्धा होऊन् भनी न्यायका निम्ति म संसारमा
आएको हुँ।" ४० अनि उहाँसँग भएका कति
फरिसीहरूले यी कुराहरू सुने, र उहाँलाई भनेः
"के हामी पनि अन्धा हौं त?" ४१ येशूले
तिनीहरूलाई भन्नुभयोः "तिमीहरू अन्धा भएका
भए तिमीहरूसँग पाप हुनेथिएन; तर अब हामी
देख्छौं भनी तिमीहरू भन्छौ, यसकारण
तिमीहरूको पाप रहिरहन्छ।"

## प्रभु येशू – असल गोठाला

१० "साँचो-साँचो म तिमीहरूलाई भन्दछु, जो
ढोकाबाट भेड़ाको गोठभित्र पस्दैन, तर
अर्कोतिरबाट माथि चढ्छ, त्यही नै चोर र डाँकू
हो। २ तर जो ढोकाबाट भित्र पस्दछ, ऊचाहिँ
भेड़ाहरूको गोठालो हो। ३ उसैका निम्ति ढोकेले
खोलिदिन्छ, अनि भेड़ाहरूले उसको सोर सुन्छन्;
अनि उसले आफ्ना भेड़ाहरूलाई नाम लिई-लिई
बोलाउँछ, र तिनीहरूलाई बाहिर लैजान्छ।
४ अनि जब उसले आफ्ना भेड़ाहरूलाई बाहिर
निकाल्छ, तब ऊ तिनीहरूको अघि-अघि हिँड्छ,
र भेड़ाहरूले उसलाई पछ्याउँछन्; किनकि
तिनीहरूले उसको सोर चिन्छन्। ५ तर तिनीहरूले
कुनै रीतिले बिरानो मानिसलाई पछ्याउनेछैनन्,
तर त्यसदेखि भाग्नेछन्; किनकि बिरानाहरूको
सोर तिनीहरूले चिन्दैनन्।" ६ यो दृष्टान्त येशूले
तिनीहरूलाई भन्नुभयो, तर उहाँले तिनीहरूलाई
भन्नुभएको कुरा के थियो, सो तिनीहरूले
बुझेनन्।

७ तब येशूले तिनीहरूलाई फेरि भन्नुभयोः
"साँचो-साँचो म तिमीहरूलाई भन्दछु, भेड़ा-
हरूको ढोका म नै हुँ। ८ जति मभन्दा अघि आए,
ती सबै चोर र डाँकूहरू हुन्। तर भेड़ाहरूले
तिनीहरूको सुनेनन्। ९ ढोका म नै हुँ, कोही मबाट
भित्र पस्यो भने उसले मुक्ति पाउनेछ, अनि भित्र
र बाहिर जानेछ, अनि खर्क पाउनेछ। १० चोर त
चोरूँ, मारूँ, र नष्ट पारूँ भनेर मात्र आउँछ।
मचाहिँ तिनीहरूले जीवन पाऊन्, र झन् प्रशस्त
गरी पाऊन् भनी आएको हुँ! ११ असल गोठालो
म नै हुँ। असल गोठालाले भेड़ाहरूका निम्ति
आफ्नो प्राण अर्पण गर्दछ। १२ तर ज्यामीचाहिँ*,
जो गोठालो होइन, अनि ती भेड़ाहरू पनि त्यसका
आफ्ना होइनन्, ब्वाँसोलाई आउँदै गरेको देखेर
भेड़ाहरूलाई छोड्छ, र भाग्छ; अनि ब्वाँसोले
तिनीहरूलाई पक्रन्छ, र भेड़ाहरूलाई तितर-बितर
पारिदिन्छ। १३ ज्यामी* भाग्छ, किनभने त्यो
ज्यालादार हो र भेड़ाहरूको वास्ता गर्दैन।
१४ असल गोठालो म नै हुँ; अनि म मेरा
भेड़ाहरूलाई चिन्छु, अनि मेरा आफ्नाहरूद्वारा म
चिनिएको छु। १५ जसरी पिताले मलाई चिन्नुहुन्छ,
उसरी नै म पितालाई चिन्छु, अनि म भेड़ाहरूका
निम्ति आफ्नो प्राण अर्पण गर्छु। १६ अनि मेरा
अरू भेड़ाहरू छन्, जोचाहिँ यस गोठका होइनन्;
तिनीहरूलाई पनि मैले ल्याउनुपर्छ, अनि
तिनीहरूले मेरो सोर सुन्नेछन्; अनि एउटै बगाल
र एउटै गोठालो हुनेछन्। १७ यही कारणले मेरा
पिताले मलाई प्रेम गर्नुहुन्छ; किनकि म मेरो प्राण,
यसलाई म फिर्ता लिउँला भनेर अर्पण गर्छु।

*१०:१२, १३ अर्थात् ज्याला लिएर काम गर्ने मानिस;

१८ कसैले यसलाई मबाट खोसेर लाँदैन, तर म
आफै यसलाई अर्पण गर्छु। यसलाई अर्पण गर्ने
मेरो अधिकार छ, र यसलाई फिर्ता लिने पनि मेरो
अधिकार छ। यो आज्ञा मैले मेरा पिताबाट
पाएको छु।''

१९ तब यी वचनहरूको कारणले फेरि
यहूदीहरूका बीचमा फाटो भयो। २० अनि तिनी-
हरूमध्ये धेरैले भनेः ''ऊसँग दुष्ट आत्मा छ, र ऊ
पागल भएको छ; तिमीहरू उसका कुरा किन
सुन्छौ?'' २१ अरूले भनेः ''यी कुराहरू दुष्ट
आत्मा लागेको मानिसका होइनन्। के दुष्ट
आत्माले अन्धाहरूका आँखा खोल्न सक्छ र?''

२२ अनि यरूशलेममा समर्पण-चाड़ थियो,
र जाड़ोको समय थियो। २३ अनि येशू मन्दिरमा,
सुलेमानको दलानमा टहलिरहनुभएको थियो।
२४ तब यहूदीहरूले उहाँलाई वरिपरि घेरे, र
उहाँलाई भनेः ''कहिलेसम्म तपाईं हामीलाई
शङ्कामा राख्नुहुन्छ? तपाईं 'ख्रीष्ट' हुनुहुन्छ भने
हामीलाई सफासँग भनिदिनुहोस्।'' २५ येशूले
तिनीहरूलाई जवाफ दिनुभयोः ''मैले तिमी-
हरूलाई भनें, तर तिमीहरूले विश्वास गरेनौ। मेरा
पिताको नाममा मैले गरेका कामहरूले नै मेरो
विषयमा गवाही दिन्छन्। २६ तर तिमीहरू
विश्वास गर्दैनौ, किनभने मैले तिमीहरूलाई
भनेझैं तिमीहरू मेरा भेड़ाहरूमध्येका होइनौ।
२७ मेरा भेड़ाहरूले मेरो सोर सुन्छन्, अनि म
तिनीहरूलाई चिन्छु, र तिनीहरूले मलाई
पछ्याउँछन्। २८ अनि म तिनीहरूलाई अनन्त
जीवन दिन्छु, र तिनीहरू कहिल्यै नष्ट हुनेछैनन्;
न ता कसैले तिनीहरूलाई मेरो हातबाट खोसेर
लैजान्छ। २९ मेरा पिता, जसले ती मलाई
दिनुभयो, सबैभन्दा महान् हुनुहुन्छ, अनि मेरा
पिताको हातबाट कसैले तिनीहरूलाई खोसेर
लैजान सक्दैन। ३० म र मेरा पिता एक हौं।''

३१ तब उहाँलाई ढुङ्गाले हान्नालाई
यहूदीहरूले फेरि ढुङ्गा टिपे। ३२ येशूले तिनी-
हरूलाई जवाफ दिनुभयोः ''मेरा पितापट्टिबाट
मैले तिमीहरूलाई धेरै असल कामहरू देखाएको
छु। तीमध्ये कुन कामका निम्ति तिमीहरू मलाई
ढुङ्गाले हान्छौ?'' ३३ यहूदीहरूले यसो भन्दै
उहाँलाई जवाफ दिएः ''असल कामका निम्ति
हामी तिमीलाई ढुङ्गाले हान्दैनौं, तर परमेश्वरका
निन्दाका निम्ति; अनि एउटा मान्छे भएर
तिमीले आफूलाई परमेश्वर तुल्याएका हुनाले।''
३४ येशूले तिनीहरूलाई जवाफ दिनुभयोः ''के
तिमीहरूकै व्यवस्थामा, 'मैले भनें, ''तिमीहरू
ईश्वरहरू हौ''' भनी लेखिएको छैन र?
३५ जसकहाँ परमेश्वरको वचन आयो, तिनी-
हरूलाई उहाँले 'ईश्वरहरू' भन्नुभयो भने – अनि
पवित्रशास्त्र भङ्ग हुन सक्दैन – ३६ जसलाई
पिताले पवित्र गरेर संसारमा पठाउनुभयो, के
उनैलाई तिमीहरू, 'म परमेश्वरको पुत्र हुँ' भनी
मैले भनेकोमा 'तिमी परमेश्वरको निन्दा गर्छौ'
भनी भन्दछौ? ३७ म मेरा पिताका कामहरू
गर्दिनँ भने मलाई विश्वास नगर। ३८ तर म
गर्दछु भने तिमीहरूले मलाई विश्वास नगरे
तापनि कामहरूलाई ता विश्वास गर; र पिता ममा
हुनुहुन्छ, अनि म उहाँमा छु भनी तिमीहरूले जान्न
र विश्वास गर्न सक।'' ३९ यसकारण तिनीहरूले
उहाँलाई फेरि पक्रन खोजे, तर उहाँ तिनीहरूको
हातबाट उम्कनुभयो। ४० अनि उहाँ फेरि
यर्दनपारि त्यस ठाउँमा जानुभयो, जहाँ पहिले
यूहन्नाले बप्तिस्मा दिरहेका थिए; अनि उहाँ त्यहीं
रहनुभयो। ४१ अनि धेरैजना उहाँकहाँ आए, र
भनेः ''यूहन्नाले कुनै चिन्ह देखाएनन्; तर यस
मानिसको विषयमा यूहन्नाले जति कुरा भने, ती
सबै सत्य रहेछन्।'' ४२ अनि त्यहाँ धेरैले
उहाँमाथि विश्वास गरे।

*१०:३४ भजन ८२:६

## लाजरसको मृत्यु र पुनरुत्थान

**११** अब मरियम र तिनकी दिदी मार्थाको गाउँ
बेथानीमा एकजना लाजरस नाम भएका मानिस
बिरामी थिए। २ यी तिनै मरियम थिइन्, जसले
प्रभुलाई सुगन्धित तेल घसेर उहाँका पाउ आफ्नो
केशले पुछेकी थिइन्, जसका भाइ लाजरस
बिरामी थिए। ३ यसैकारण उनका दिदीहरूले
यसो भनेर उहाँकहाँ पठाए: "प्रभु, हेर्नुहोस्,
जसलाई तपाईं प्रेम गर्नुहुन्छ, उनी बिरामी छन्।"
४ तर यो सुनेर येशूले भन्नुभयो: "यो मृत्युसम्म
पुऱ्याउने रोग होइन, तर यसद्वारा परमेश्वरको
पुत्रको महिमा होस् भनेर यो परमेश्वरको
महिमाका निम्ति हो।" ५ अब येशूले मार्था,
तिनकी बहिनी र लाजरसलाई प्रेम गर्नुहुन्थ्यो।
६ यसकारण उनी बिरामी छन् भनेर जब उहाँले
सुन्नुभयो, तब जुन ठाउँमा उहाँ हुनुहुन्थ्यो, त्यहीं
अझै दुई दिन रहनुभयो। ७ तब, त्यसपछि उहाँले
आफ्ना चेलाहरूलाई भन्नुभयो: "हामी फेरि
यहूदिया जाऔं" ८ उहाँका चेलाहरूले उहाँलाई
भने: "हे रब्बी, भर्खरै यहूदीहरूले तपाईंलाई
ढुङ्गाले हान्न खोजेका थिए, अनि के तपाईं फेरि
त्यहीं जानुहुन्छ?" ९ येशूले जवाफ दिनुभयो:
"के दिनमा बाह्र घण्टा हुँदैनन् र? कोही मानिस
दिनमा हिँड्छ भने उसले ठेस खाँदैन, किनभने
उसले यस संसारको ज्योति देख्छ। १० तर कोही
मानिस रातमा हिँड्छ भने त्यसले ठेस खान्छ,
किनभने त्यसमा ज्योति हुँदैन।" ११ यी कुराहरू
उहाँले भन्नुभयो; अनि त्यसपछि उहाँले
तिनीहरूलाई भन्नुभयो: "हाम्रा साथी लाजरस
निदाएका छन्, तर म उनलाई निद्राबाट बिउँझाउन
जान्छु।" १२ तब उहाँका चेलाहरूले भने: "प्रभु,
उनी निदाएका छन् भने उनी निको हुनेछन्।"
१३ तर येशूले उनको मृत्युको विषयमा कुरा
गर्नुभएको थियो; तर तिनीहरूले चाहिँ निद्रामा
विश्राम लिरहेको कुरा उहाँले गर्नुभएको हो भन्ने
ठाने। १४ तब येशूले तिनीहरूलाई सफासँग
भन्नुभयो: "लाजरस मरेका छन्। १५ अनि
तिमीहरूले विश्वास गर्न सक भनी म त्यहाँ
नभएकोमा म तिमीहरूकै निम्ति आनन्दित छु;
तरै पनि हामी उनीकहाँ जाऔं।" १६ तब दिदिमस
भनिने थोमाले आफ्ना सङ्गी-चेलाहरूलाई भने:
"लौ, उहाँसँगै मर्न हामी पनि जाऔं।"
१७ जब येशू आउनुभयो, तब उहाँले
उनलाई चिहानमा राखेको चार दिन भइसकेको
भेट्टाउनुभयो। १८ अब बेथानी यरूशलेमको
नजिकै, प्रायः दुई माइल टाढ़ामा थियो। १९ अनि
यहूदीहरूमध्ये धेरैजना मार्था र मरियमकहाँ,
उनीहरूका भाइको विषयमा उनीहरूलाई सान्त्वना
दिन आएका थिए। २० तब येशू आउँदै हुनुहुन्छ
भन्ने सुन्नासाथ मार्था गइन् र उहाँलाई भेटिन्,
तर मरियम घरमा बसिरहिन्। २१ तब मार्थाले
येशूलाई भनिन्: "प्रभु, तपाईं यहाँ हुनुभएको भए
मेरो भाइ मर्नेथिएन। २२ तर म जान्दछु, अहिले
पनि तपाईंले परमेश्वरलाई जे पनि माग्नुहुनेछ,
परमेश्वरले त्यो तपाईंलाई दिनुहुनेछ।" २३ येशूले
तिनलाई भन्नुभयो: "तिम्रो भाइ बौरेर उठ्नेछ।"
२४ मार्थाले उहाँलाई भनिन्: "म जान्दछु, अन्तिम
दिनमा, बौरिउठाइमा* ऊ बौरेर उठ्नेछ।"
२५ येशूले तिनलाई भन्नुभयो: "बौरिउठाइ र
जीवन म नै हुँ; जसले ममाथि विश्वास गर्छ, ऊ
मरे तापनि जिउनेछ। २६ अनि जो जिउँछ र
ममाथि विश्वास गर्छ, त्यो कहिल्यै मर्नेछैन; के
तिमी यो विश्वास गर्छ्यौ।" २७ तिनले उहाँलाई
भनिन्: "हजुर, प्रभु; यस संसारमा आउनुपर्ने
परमेश्वरका पुत्र 'ख्रीष्ट' तपाईं नै हुनुहुन्छ भनी म
विश्वास गर्छु।" २८ अनि यी कुराहरू भनेपछि
तिनी गइन्, र आफ्नी बहिनी मरियमलाई यसो

*११:२४ वा 'पुनरुत्थानमा'

भन्दै सुटुक्क बोलाइन्: "गुरुज्यू आउनुभएको
छ, र तिमीलाई बोलाउँदै हुनुहुन्छ।" २९ यो
सुन्नासाथ तिनी झट्टै उठिन्, अनि उहाँकहाँ
आइन्। ३० अब येशू अझै पनि त्यस गाउँभित्र
आउनुभएको थिएन, तर मार्थाले उहाँलाई जहाँ
भेटेकी थिइन्, त्यही ठाउँमा हुनुहुन्थ्यो। ३१ तब
ती यहूदीहरू, जो तिनीसित घरभित्र थिए अनि
तिनलाई सान्त्वना दिन्थे, मरियमलाई झट्टै उठेर
बाहिर गएकी देखेर यसो भन्दै तिनको पछि
लागेः "यिनी रुनलाई चिहानतिर गइरहेकी
छन्।" ३२ जब मरियम येशू हुनुभएको ठाउँमा
आइन्, तब उहाँलाई देखेर उहाँलाई यसो भन्दै
तिनी उहाँका पाउमा परिन्: "प्रभु, तपाईं यहाँ
हुनुभएको भए मेरो भाइ मर्नेथिएन।"

३३ यसकारण जब येशूले तिनलाई
रोइरहेकी, र तिनीसित आएका यहूदीहरूलाई पनि
रोइरहेका देख्नुभयो, तब उहाँ आत्मामा पीड़ित
हुनुभयो र विचलित हुनुभयो, ३४ अनि भन्नुभयोः
"तिमीहरूले उनलाई कहाँ राखेका छौ?"
तिनीहरूले उहाँलाई भनेः "प्रभु, आउनुहोस्, र
हेर्नुहोस्।" ३५ येशू रुनुभयो। ३६ तब यहूदी-
हरूले भनेः "हेर, उहाँले उनलाई कति माया
गर्नुहुन्थ्यो।" ३७ अनि तिनीहरूमध्ये कतिले भनेः
"अन्धाका आँखा खोल्ने यी मानिसले के यस
मान्छेलाई पनि नमर्ने तुल्याउन सकेनन् त?"
३८ यसकारण येशू फेरि आफूभित्र पीड़ित हुँदै
चिहानमा आउनुभयो। त्यो एउटा गुफा थियो,
अनि त्यसमाथि एउटा ढुङ्गा राखिएको थियो।
३९ येशूले भन्नुभयोः "यो ढुङ्गा हटाओ।" मर्नेकी
दिदी मार्थाले उहाँलाई भनिन्: "प्रभु, यस
बेलासम्म ता ऊ गन्हाइसकेको छ; किनभने ऊ
मरेको चार दिन भइसक्यो।" ४० येशूले तिनलाई
भन्नुभयोः "तिमीले विश्वास गर्‍यौ भने तिमीले
परमेश्वरको महिमा देख्नेछौ भनी के मैले
तिमीलाई भनिनँ र?" ४१ तब त्यो मुर्दा राखिएको
ठाउँबाट तिनीहरूले त्यो ढुङ्गा हटाए। अनि
येशूले आँखा माथि उठाएर भन्नुभयोः "हे पिता,
तपाईंले मेरो बिन्ती सुन्नुभएकोमा म तपाईंलाई
धन्यवाद दिन्छु। ४२ अनि तपाईंले सधैं मेरो बिन्ती
सुन्नुहुन्छ भनी मलाई थाह थियो; तर वरिपरि
उभिरहेका मानिसहरूको कारणले, तपाईंले मलाई
पठाउनुभएको हो भनी तिनीहरूले विश्वास
गरून् भनेर मैले यो भनें।" ४३ अनि यी कुराहरू
भनेपछि उहाँ ठूलो सोरले कराउनुभयोः "हे
लाजरस, बाहिर आऊ!" ४४ अनि ती मरेका
मानिस कात्रोले हात-पाउ बाँधिएकै अवस्थामा
बाहिर निस्के, अनि उनको अनुहार एउटा रुमालले
बेरिएको थियो। येशूले तिनीहरूलाई भन्नुभयोः
"उनलाई फुकाइदेओ, र जान देओ।" ४५ तब
जुन यहूदीहरूले मरियमकहाँ आएर येशूले
गर्नुभएका कुराहरू देखेका थिए, तिनीहरूमध्ये
धेरैले उहाँमाथि विश्वास गरे।

## प्रभु येशूलाई मार्ने मतो

मत्ती २६:१-५; मर्कूस १४:१-२;
लूका २२:१-२

४६ तर तिनीहरूमध्ये कतिचाहिँ फरिसी-
हरूकहाँ गए, अनि तिनीहरूलाई येशूले गर्नुभएका
कुराहरू बताइदिए। ४७ तब मुख्य पूजाहारी र
फरिसीहरूले एउटा महासभा जुटाए र भनेः "हामी
के गरौं? किनकि यस मान्छेले धेरै चिन्हहरू
देखाउँछ। ४८ यसलाई हामीले त्यसै छोड़िदियौं
भने ता सबैले यसमाथि विश्वास गर्नेछन्, र
रोमीहरू आउनेछन् अनि हाम्रा ठाउँ र जातिलाई
समेत लैजानेछन्।" ४९ अनि तिनीहरूमा
कायफा नाम भएको एकजनाले, त्यस सालका
महापूजाहारी भएका हुनाले तिनीहरूलाई भनेः
"तिमीहरू केही पनि जान्दैनौ, ५० साथै सारा
जाति नष्ट नहोस् भनेर यस जनताका निम्ति
एकजना मानिस मर्नु नै हाम्रा लागि फाइदा छ भनी

सोच्न पनि सक्दैनौ।" ५१ तर यो कुरा तिनले
आफ्नैपट्टिबाट भनेनन्, तर त्यस सालका
महापूजाहारी भएका हुनाले तिनले येशूचाहिँ
त्यस जातिका निम्ति मर्नुपर्छ भनी भविष्यवाणी
बोलेका थिए; ५२ अनि त्यस जातिका निम्ति
मात्र होइन, तर चारैतिर छरिएका परमेश्वरका
सन्तानलाई एक बनाउनालाई उहाँले जम्मा पारून्
भनेर पनि हो।

५३ तब त्यस दिनदेखि उहाँलाई मार्नका
निम्ति तिनीहरूले आपसमा मतो गरे।
५४ यसकारण येशू यहूदीहरूका बीचमा फेरि
खुल्लमखुल्ला हिँड्नुभएन; तर त्यहाँबाट
उजाड़स्थानको नजिकैको इलाकाभित्र, इफ्राइम
भनिने शहरमा जानुभयो, अनि त्यहाँ आफ्ना
चेलाहरूसित रहनुभयो। ५५ अनि यहूदीहरूको
निस्तारचाड़ नजिकै थियो; अनि निस्तार-
चाड़भन्दा पहिले आफूलाई शुद्ध पार्नालाई
धेरैजना गाउँबस्तीबाट माथि यरूशलेम गए।
५६ तब तिनीहरूले येशूलाई खोजे, अनि मन्दिरमा
उभिएर आपसमा भनेः "तिमीहरूलाई कस्तो
लाग्छ? के तिनी यस चाड़मा आउनेछैनन् त?"
५७ अब मुख्य पूजाहारी र फरिसीहरूले उहाँलाई
पक्रन सकौं भनेर, उहाँ कहाँ हुनुहुन्छ, सो कसैले
थाह पाएमा त्यसले देखाइदेओस् भनी आज्ञा
दिएका थिए।

## मरियमले प्रभुका पाउमा तेल लगाइन्

१२ तब निस्तार-चाड़को ६ दिनअघि येशू
बेथानीमा आउनुभयो, जहाँ लाजरस थिए, जो
मरेका थिए, जसलाई उहाँले मरेकाहरूबाट
बौराएर उठाउनुभएको थियो। २ त्यहाँ तिनीहरूले
उहाँका निम्ति बेलुकीको भोजन तयार पारे; अनि
मार्थाले सेवा गरिन्; तर लाजरसचाहिँ उहाँसँग
खानका निम्ति बस्नेहरूमध्ये एक थिए। ३ तब
मरियमले एक माना साह्रै किम्मती जटामसीको
सुगन्धित तेल लिएर येशूका पाउमा घसिदिइन्, र
उहाँका पाउ आफ्नै केशले पुछिन्; अनि तेलको
सुगन्धले घर भरियो। ४ तब उहाँका चेलाहरू-
मध्ये एकजनाले अर्थात् शिमोनको छोरो यहूदा
इस्करयोतीले, जसले उहाँलाई पक्राउन आँटेको
थियो, भन्योः ५ "किन यो सुगन्धित तेल तीन सय
दीनारमा बेचिएन र गरिबहरूलाई दिइएन?"
६ गरिबहरूका लागि त्यसको वास्ता भएकोले
त्यसले यसो भनेको होइन, तर यसकारण कि त्यो
चोर थियो, अनि थैली त्योसँग रहन्थ्यो, र त्यसमा
जे हालिन्थ्यो, त्यो त्यसले लैजाने गर्थ्यो। ७ तब
येशूले भन्नुभयोः "तिनलाई छोड़िदेऊ; तिनले मेरो
गाड़िने दिनका निम्ति यो राखिछोड़ेकी छन्।
८ किनकि गरिबहरू सधैं तिमीहरूसँग हुन्छन्; तर
म तिमीहरूको साथमा सधैं हुन्नँ।" ९ यसकारण
यहूदीहरूमध्ये धेरैले उहाँ त्यहाँ हुनुहुन्छ भनी
थाह पाए, अनि तिनीहरू येशूकै कारणले मात्र
होइन, तर लाजरसलाई पनि हेर्न आए, जसलाई
उहाँले मरेकाहरूबाट बौराउनुभएको थियो। १० तर
मुख्य पूजाहारीहरूले लाजरसलाई पनि मार्ने मतो
गरे। ११ किनभने उनकै कारणले गर्दा यहूदी-
हरूमध्ये धेरैजना गए, र येशूमाथि विश्वास गरे।

## यरूशलेमभित्र प्रभु येशूको प्रवेश

मत्ती २१:१-११; मर्कूस ११:१-१०;
लूका १९:२९-३८

१२ भोलिपल्ट चाड़मा आएको ठूलो भीड़,
येशू यरूशलेममा आउँदै हुनुहुन्छ भन्ने सुनेर
१३ खजूरका हाँगाहरू लिएर उहाँलाई भेट्न
निस्क्यो र "होसन्ना*! धन्य इस्राएलका राजा, जो
प्रभुको* नाममा आउनुहुन्छ!" भन्दै करायो।
१४ अनि एउटा गधाको बच्चा पाएर येशू
त्यसमाथि बस्नुभयो, जसरी लेखिएको छः

*१२:१३ होसन्ना – अभिवादन, शुभेच्छा, प्रशंसा दर्साउनालाई प्रयोग गरिने हिब्रू शब्द

१५ 'नडराऊ सियोनकी छोरी; हेर,
तिम्रा राजा गधाको बच्चामाथि बसेर
आउनुहुन्छ।'*
१६ उहाँका चेलाहरूले पहिले यी कुराहरू
बुझेनन्, तर येशूको महिमा भएपछि, यी कुराहरू
ता उहाँको विषयमा पो लेखिएका रहेछन्, अनि
यी कुराहरू तिनीहरूले उहाँलाई गरेका रहेछन्
भनी तिनीहरूले सम्झे। १७ यसकारण उहाँले
लाजरसलाई चिहानबाट बोलाउनुहुँदा र उनलाई
मरेकाहरूबाट बौराउनुहुँदा जो मानिसहरू उहाँका
साथमा थिए, उनीहरूले गवाही दिए। १८ यही
कारणले गर्दा मानिसहरूले उहाँसित भेट गरे,
किनकि उहाँले यो चिन्ह देखाउनुभएको थियो
भनी तिनीहरूले सुने। १९ यसैकारण फरिसीहरूले
आपसमा कुरा गरेः "तिमीहरूले केही पनि गर्न
सक्दैनौ भन्ने कुरा देख्छौ त? हेर, संसारै उसको
पछि लागेको छ।"
२० अनि उपासना गर्नका निम्ति माथि
चाड़मा आउनेहरूका बीचमा केही ग्रीक पनि थिए;
२१ यसकारण तिनीहरू गालीलको बेथसैदाका
फिलिपकहाँ आएर उनलाई यसो भन्दै विन्ती
गरेः "हजुर, हामी येशूलाई हेर्न चाहन्छौं।"
२२ फिलिपले आएर अन्द्रियासलाई भने, अनि
फेरि अन्द्रियास र फिलिपले येशूलाई भने। २३ तर
येशूले तिनीहरूलाई यसो भन्दै जवाफ दिनुभयोः
"मानिसका पुत्रको महिमा हुने घड़ी आइपुगेको
छ। २४ साँचो-साँचो म तिमीहरूलाई भन्दछु,
गहुँको दाना भुइँमा खसेर मरेन भने त्यो एकलै
रहन्छ; तर मर्‍यो भने त्यसले धेरै फल फलाउँछ।
२५ जसले आफ्नो प्राणलाई माया गर्छ, त्यसले त्यो
गुमाउनेछ; अनि जसले यस संसारमा आफ्नो
प्राणलाई घृणा गर्छ, त्यसले यसलाई अनन्त
जीवनसम्म जोगाइराख्नेछ। २६ कसैले मेरो सेवा
गर्छ भने उसले मलाई पछ्याओस्; अनि म जहाँ छु,
त्यहाँ मेरो सेवक पनि हुनेछ। अनि कसैले मेरो
सेवा गर्छ भने उसलाई मेरा पिताले आदर
गर्नुहुनेछ। २७ अहिले मेरो प्राण विचलित भएको
छ, र म के भनूँ? 'पिता, मलाई यस घड़ीबाट
बचाउनुहोस्?' तर यही कारणका निम्ति म यस
घड़ीसम्म आइपुगें। २८ हे पिता, तपाईंको नामको
महिमा गर्नुहोस्।" तब स्वर्गबाट यसो भन्ने एउटा
वाणी आयोः "मैले महिमा गरेको छु, र फेरि पनि
महिमा गर्नेछु।" २९ यसकारण त्यहाँ उभिएका
मानिसहरूले यो सुनेर भनेः "मेघ गर्जियो।"
अरूले भनेः "उहाँसँग स्वर्गदूत बोलेका हुन्।"
३० येशूले जवाफ दिएर भन्नुभयोः "यो वाणी मेरा
लागि होइन, तर तिमीहरूका लागि आएको हो।
३१ अब यस संसारको न्याय हुन्छ; अब यस
संसारको शासक निकालिनेछ। ३२ अनि म पृथ्वी-
देखि माथि उचालिएँ भने सबै मानिसहरूलाई म
आफूकहाँ खिँच्नेछु।" ३३ तर कुन मृत्युले उहाँ
मर्न लाग्नुभएको थियो, त्यसलाई सङ्केत गर्दै
उहाँले यसो भन्नुभयो। ३४ मानिसहरूले उहाँलाई
जवाफ दिएः "ख्रीष्ट सधैंभरि रहनुहुन्छ भनी
हामीले व्यवस्थाबाट सुनेका छौं; अनि 'मानिसका
पुत्र माथि उचालिनुपर्छ' भनी तपाईं कसरी
भन्नुहुन्छ त? यी मानिसका पुत्र को हुन्?" ३५ तब
येशूले तिनीहरूलाई भन्नुभयोः "अझै केही
समयसम्म ज्योति तिमीहरूसँग रहन्छ। ज्योति
तिमीहरूसँग रहुन्जेल हिँड़, नत्र अन्धकारले
तिमीहरूलाई छोप्ला; किनकि अन्धकारमा
हिँड्नेले, ऊ कहाँ जान्छ, सो थाह पाउँदैन।
३६ तिमीहरूसँग ज्योति हुँदा-हुँदै ज्योतिमाथि
विश्वास गर, र तिमीहरू ज्योतिका सन्तान
हुनेछौ।" यी कुराहरू येशूले भन्नुभयो, र त्यहाँ-
बाट हिँड्नुभयो, अनि तिनीहरूबाट लुक्नुभयो।
३७ तर तिनीहरूका सामु उहाँले अनेकौं
चिन्हहरू गर्नुभए तापनि तिनीहरूले उहाँमाथि

*१२:१५ जकरिया ९:९

विश्वास गरेनन्। ३८ यशैया भविष्यवक्ताको वचन
पूरा होस् भनेर नै यसो भएको हो, जो उनले भनेः
'हे प्रभु, हाम्रो सुसमाचार कसले विश्वास
गरेको छ र? अनि प्रभुको* बाहुबल
कसकहाँ प्रकट भएको छ र?'*
३९ यसैकारण तिनीहरूले विश्वास गर्न
सकेनन्, किनभने यशैयाले फेरि भनेका छन्ः
४० 'तिनीहरूले आफ्ना आँखाले नदेखून्,
र आफ्ना हृदयले नबुझून्, नत्र तिनीहरू
फर्कलान्, र मैले तिनीहरूलाई निको
पार्नुपर्ला भनेर उहाँले तिनीहरूका आँखा
अन्धा बनाउनुभएको छ र तिनीहरूको
हृदय कठोर पार्नुभएको छ।'*
४१ उहाँको महिमा देखेर उहाँको विषयमा
बोल्दाहुँदि यशैयाले यी कुराहरू भने। ४२ तरै
पनि मुख्य शासकहरूमध्ये पनि धेरैले उहाँमाथि
विश्वास गरे, तर फरिसीहरूको कारणले कहीं
सभाघरबाट निकालिनुपर्ला कि भनेर तिनीहरूले
उहाँलाई स्वीकार गरेनन्; ४३ किनकि तिनीहरूले
परमेश्वरको प्रशंसाभन्दा मानिसहरूकै प्रशंसा
बेसी प्रेम गरे।
४४ येशूले कराएर भन्नुभयोः "जसले
ममाथि विश्वास गर्छ, उसले ममाथि होइन,
तर मलाई पठाउनुहुनेमाथि विश्वास गर्छ।
४५ अनि जसले मलाई देख्छ, उसले मलाई
पठाउनुहुनेलाई देख्छ। ४६ ममाथि विश्वास गर्ने
हरेकले अन्धकारमा रहन नपरोस् भनेर म यस
संसारमा ज्योति भएर आएको हुँ। ४७ अनि
कसैले मेरा वचनहरू सुन्छ र विश्वास गर्दैन भने
म उसको न्याय गर्दिनँ; किनभने म संसारको
न्याय गर्नालाई होइन, तर संसारलाई बचाउन
आएँ। ४८ जसले मलाई रद्द गर्छ र मेरा वचनहरू
ग्रहण गर्दैन, त्यसलाई न्याय गर्ने एउटा छ – मैले
बोलेको वचनले नै अन्तिम दिनमा त्यसको न्याय
गर्नेछ। ४९ किनभने मैले आफ्नैपट्टिबाट बोलेको
छैनँ, तर मलाई पठाउनुहुने पिताले, मैले के
भन्नुपर्थ्यो र मैले के बोल्नुपर्थ्यो, सो मलाई आज्ञा
दिनुभयो। ५० अनि म जान्दछु, उहाँको आज्ञा-
चाहिँ अनन्त जीवन हो; यसकारण जे म बोल्दछु,
पिताले मलाई जस्तो भन्नुभयो, त्यस्तै म
बोल्दछु।"

## प्रभुले चेलाहरूका पाउ धुनुभयो

१३ अब निस्तार-चाड्को अघि, यस
संसारबाट पिताकहाँ जाने आफ्नो घड़ी आइपुगेको
येशूले थाह पाएर संसारमा भएका आफ्नाहरूलाई
प्रेम गरेर उहाँले तिनीहरूलाई अन्तसम्म प्रेम
गर्नुभयो। २ अनि बेलुकीको भोजन हुँदै गर्दा
शैतानले शिमोनको छोरो यहूदा इस्करयोतीको
हृदयमा उहाँलाई पक्राइदिने कुरा हालिसकेको
थियो। ३ पिताले सबै थोक उहाँकै हातमा
दिनुभएको छ, अनि उहाँ परमेश्वरबाट
आउनुभएको हो र परमेश्वरकहाँ जानुहुन्छ भन्ने
कुरा येशूले थाह पाएर ४ उहाँ भोजनबाट
उठ्नुभयो, अनि आफ्ना लुगा एकातिर राखेर
तौलिया लिनुभयो र आफ्नो कम्मरमा बाँध्नुभयो।
५ त्यसपछि उहाँले चुठ्वामा पानी हाल्नुभयो,
अनि चेलाहरूका पाउ धुन, र जुन तौलिया
उहाँको कम्मरमा बाँधिएको थियो, त्यसैले
पुछ्न थाल्नुभयो।
६ तब उहाँ शिमोन पत्रुसकहाँ आउनुभयो,
अनि उनले उहाँलाई भनेः "हे प्रभु, के तपाईं मेरा
पाउ धुनुहुन्छ?" ७ येशूले जवाफ दिएर उनलाई
भन्नुभयोः "म के गर्दछु, तिमीले अहिले बुझ्दैनौ,
तर तिमीले पछि बुझ्नेछौ।" ८ पत्रुसले उहाँलाई
भनेः "तपाईंले मेरा पाउ कहिल्यै धुन पाउनु-
हुनेछैन।" येशूले उनलाई जवाफ दिनुभयोः
"मैले तिमीलाई धोइनँ भने मसित तिम्रो केही

*१२:३८ यशैया ५३:१; *१२:४० यशैया ६:१०

भाग छैन।" ९ शिमोन पत्रुसले उहाँलाई भने:
"प्रभु, मेरा पाउ मात्र होइन, तर मेरा हात र मेरो
शिर पनि।" १० येशूले उनलाई भन्नुभयो: "जसले
नुहाएको छ, उसलाई पाउहरू धुनुबाहेक अरू
केही खाँचो छैन, तर ऊ पूरा शुद्ध छ; अनि
तिमीहरू शुद्ध छौ, तर सबै ता होइन।"
११ किनकि आफूलाई पक्राउनेलाई उहाँले
चिन्नुभएको थियो; यसैकारण उहाँले 'तिमीहरू
सबैचाहिँ शुद्ध छैनौ' भन्नुभयो।

१२ यसकारण जब उहाँले तिनीहरूका पाउ
धुनुभयो र आफ्ना लुगा पहिरनुभयो, तब फेरि
बसेर उहाँले तिनीहरूलाई भन्नुभयो: "मैले
तिमीहरूलाई के गरेको छु, के तिमीहरू जान्दछौ?
१३ तिमीहरू मलाई 'गुरु' र 'प्रभु' भन्दछौ, अनि
तिमीहरूले ठीक भन्दछौ; किनभने म उही हुँ।
१४ यसैकारण मैले तिमीहरूका प्रभु र गुरु भएर
तिमीहरूका पाउ धोएँ भने तिमीहरूले पनि एक-
अर्काका पाउ धुनैपर्छ। १५ किनकि जस्तो मैले
तिमीहरूलाई गरेको छु, त्यस्तै तिमीहरूले पनि
गर्नुपर्छ भनेर मैले तिमीहरूलाई एउटा उदाहरण
दिएको छु। १६ साँचो-साँचो म तिमीहरूलाई
भन्दछु, दास आफ्नो मालिकभन्दा ठूलो हुँदैन,
न ता पठाइएको व्यक्ति आफूलाई पठाउनेभन्दा
ठूलो हुन्छ। १७ तिमीहरू यी कुराहरू जान्दछौ भने
र यी कुराहरू गर्दछौ भने तिमीहरू धन्यका हौ।"

## पक्राइने विषयमा प्रभुको भविष्यवाणी र यहूदा इस्करयोती

१८ "तिमीहरू सबैको विषयमा चाहिँ म
भन्दिनँ। ज-जसलाई मैले चुनेको छु, उनीहरूलाई
म चिन्छु; तर पवित्रशास्त्र पूरा होस् भनेर –
'जसले मसँग रोटी खान्छ, उसैले मेरो विरोधमा
आफ्नो लात्ती उठाएको छ।'* १९ अब यो
हुनुभन्दा पहिल्यै म तिमीहरूलाई भन्दछु, र जब
यो हुन आउला, तब म 'उही' रहेछु भनी
तिमीहरूले विश्वास गर्न सक। २० साँचो-साँचो म
तिमीहरूलाई भन्दछु, जसलाई म पठाउँला,
उसलाई ग्रहण गर्नेले मलाई ग्रहण गर्दछ, अनि
जसले मलाई ग्रहण गर्दछ, उसले मलाई
पठाउनुहुनेलाई ग्रहण गर्दछ।"

२१ जब येशूले यी कुराहरू भन्नुभयो, तब
उहाँ आत्मामा विचलित हुनुभयो, अनि गवाही
दिँदै भन्नुभयो: "साँचो-साँचो म तिमीहरूलाई
भन्दछु, तिमीहरूमध्ये एकजनाले मलाई
पक्राउनेछ।" २२ तब उहाँले कसको विषयमा
भन्नुभएको होला भनी शङ्का गर्दै चेलाहरूले
एक-अर्कालाई हेरे। २३ अब उहाँका चेलाहरू-
मध्ये एकजना, जसलाई येशूले प्रेम गर्नुहुन्थ्यो,
येशूको छातीमा अडेसिएर बसेका थिए।
२४ यसैकारण शिमोन पत्रुसले, 'जसको विषयमा
उहाँले भन्नुभयो, त्यो को हो? सोध' भनेर
उनलाई इशारा गरे। २५ तब येशूको छातीमा
अडेसिँदै उनले उहाँलाई भने: "प्रभु, त्यो को
हो?" २६ येशूले जवाफ दिनुभयो: "जसलाई म
यो रोटीको टुक्रा चोपेर दिनेछु, उही त्यो हो।"
अनि रोटीको टुक्रा चोपेर उहाँले त्यो शिमोनको
छोरो यहूदा इस्करयोतीलाई दिनुभयो। २७ अनि
रोटीको टुक्रापछि शैतान त्यसभित्र पस्यो। तब
येशूले भन्नुभयो: "तिमी जे गर्दछौ, चाँड़ै
गरिहाल।" २८ तर कुन मनसायले उहाँले
त्यसलाई यसो भन्नुभयो, सो कुरो खानका निम्ति
बस्नेहरूमध्ये कसैले पनि बुझेन। २९ किनकि
यहूदासित थैली भएको हुनाले येशूले त्यसलाई
"चाड़का लागि हामीलाई जे खाँचो छ, ती
चीजहरू किन" अथवा उसले गरिबहरूलाई
केही देओस् भनी भन्नुभयो भनी कतिले सोचे।
३० तब रोटीको टुक्रा लिएपछि त्यो तुरुन्तै बाहिर
निस्किहाल्यो। अनि रातको समय थियो।

*१३:१८ भजन ४१:९

## नयाँ आज्ञा – प्रेम

३१ यसकारण जब त्यो बाहिर निस्क्यो,
तब येशूले भन्नुभयोः “अब मानिसका पुत्रको
महिमा भएको छ, अनि उनमा परमेश्वर महिमित
हुनुभएको छ। ३२ यदि परमेश्वर उनमा महिमित
हुनुहुन्छ भने परमेश्वरले पनि उनलाई आफैमा
महिमित गराउनुहुनेछ, अनि तुरुन्तै उनलाई
महिमित गराउनुहुनेछ। ३३ हे साना नानीहरूहो, म
तिमीहरूसँग अझै केही बेरसम्म हुन्छु। तिमीहरूले
मलाई खोज्नेछौ; अनि जसरी मैले यहूदीहरूलाई
‘म जहाँ जान्छु, त्यहाँ तिमीहरू आउन सक्दैनौ’
भनें, उसरी नै अब म तिमीहरूलाई पनि भन्छु।
३४ एउटा नयाँ आज्ञा म तिमीहरूलाई दिन्छु –
तिमीहरूले एक-अर्कालाई प्रेम गर; जसरी मैले
तिमीहरूलाई प्रेम गरेको छु, उसरी नै तिमीहरूले
पनि एक-अर्कालाई प्रेम गर। ३५ तिमीहरूको
आपसमा प्रेम छ भने यसैबाट सबैले तिमीहरू
मेरा चेला रहेछौ भनी थाह पाउनेछन्।”
३६ शिमोन पत्रुसले उहाँलाई भनेः “प्रभु, तपाईं
कहाँ जानुहुन्छ?” येशूले उनलाई जवाफ दिनुभयो,
“जहाँ म जान्छु, त्यहाँ अहिले तिमीले मलाई
पछ्याउन सक्दैनौ, तर पछि तिमीले मलाई
पछ्याउनेछौ।” ३७ पत्रुसले उहाँलाई भनेः “प्रभु,
अहिले म तपाईंलाई किन पछ्याउन सक्दिनँ?
म तपाईंका लागि आफ्नो प्राण अर्पण गर्नेछु।”
३८ येशूले उनलाई जवाफ दिनुभयोः “के तिमीले
मेरा निम्ति आफ्नो प्राण अर्पण गर्नेछौ? साँचो-
साँचो म तिमीलाई भन्दछु, तिमीले मलाई
तीनपल्ट इन्कार नगरेसम्म भाले बास्नेछैन।”

## प्रभु येशू एकमात्र स्वर्ग जाने बाटो हुनुहुन्छ

१४ “तिमीहरूको हृदय विचलित नहोस्;
तिमीहरू परमेश्वरमा विश्वास गर्दछौ, ममा पनि
विश्वास गर। २ मेरा पिताको घरमा धेरै
वासस्थानहरू छन्; त्यस्तो नहुँदो हो ता म
तिमीहरूलाई भन्नेथिएँ। म तिमीहरूका निम्ति
ठाउँ तयार पार्न जान्छु। ३ अनि मैले गएर
तिमीहरूका निम्ति ठाउँ तयार पारें भने म फेरि
आउनेछु; अनि म जहाँ छु, त्यहाँ तिमीहरू पनि
होओ भनेर म तिमीहरूलाई आफूकहाँ लिनेछु।
४ अनि म जहाँ जान्छु, त्यो तिमीहरू जान्दछौ,
अनि तिमीहरू बाटो चिन्छौ।” ५ थोमाले उहाँलाई
भनेः “प्रभु, तपाईं कहाँ जानुहुन्छ, हामी जान्दैनौं;
तब कसरी हामी बाटो चिन्न सक्छौं र?” ६ येशूले
तिनलाई भन्नुभयोः “बाटो, सत्य र जीवन म नै
हुँ; मद्वारा बाहेक कोही पनि पिताकहाँ आउँदैन।”

## प्रभु येशू र पिता एक हुनुहुन्छ

७ “तिमीहरूले मलाई चिनेका भए मेरा
पितालाई पनि चिनेका हुन्थ्यौ; अनि अबदेखि
उसो तिमीहरू उहाँलाई चिन्छौ, अनि उहाँलाई
देखेका छौ।” ८ फिलिपले उहाँलाई भनेः “प्रभु,
हामीलाई पिता देखाइदिनुहोस्, अनि यही हाम्रा
निम्ति पर्याप्त हुन्छ।” ९ येशूले तिनलाई
भन्नुभयोः “यतिका समयसम्म म तिमीहरूसँग
रहें, अनि अझै पनि तिमीले मलाई चिनेका छैनौ,
फिलिप? जसले मलाई देखेको छ, उसले
पितालाई देखेको छ; अनि ‘हामीलाई पिता
देखाइदिनुहोस्, भनी तिमी कसरी भन्छौ? १० म
पितामा छु, अनि पिता ममा हुनुहुन्छ भनी के तिमी
विश्वास गर्दैनौ? जुन वचनहरू म तिमीहरूलाई
भन्दछु, म आफ्नैपट्टिबाट भन्दिनँ; तर पिताले,
जो मभित्र रहनुहुन्छ, यी कामहरू गर्नुहुन्छ। ११ म
पितामा छु, अनि पिता ममा हुनुहुन्छ भनी मलाई
विश्वास गर; तर होइन भने यी कामहरूकै
कारणले मलाई विश्वास गर। १२ साँचो-साँचो म
तिमीहरूलाई भन्दछु, जसले ममाथि विश्वास
गर्छ, उसले पनि जुन कामहरू म गर्दछु, सो

गर्नेछ; अनि यीभन्दा ठूला कामहरू गर्नेछ,
किनभने म मेरा पिताकहाँ जान्छु। १३ अनि जेसुकै
तिमीहरू मेरो नाममा माग्यौ, पिताको महिमा
पुत्रमा होस् भनेर म त्यो गर्नेछु। १४ तिमीहरूले
कुनै कुरा मेरो नाममा माग्यौ भने म त्यो गर्नेछु।"

## शान्तिदाता अर्थात् पवित्र आत्मा पठाउने प्रतिज्ञा

१५ "तिमीहरूले मलाई प्रेम गर्छौ भने मेरा
आज्ञाहरू पालन गर। १६ अनि म पितालाई प्रार्थना
गर्नेछु, र उहाँले अर्को शान्तिदाता*, उहाँ सधैंभरि
तिमीहरूसँगै रहून् भनेर तिमीहरूलाई दिनुहुनेछ;
१७ अर्थात् सत्यको आत्मा, जसलाई संसारले
ग्रहण गर्न सक्दैन; किनभने त्यसले न ता उहाँलाई
देख्छ, न उहाँलाई चिन्छ; तर तिमीहरूले उहाँलाई
चिन्छौ, किनकि उहाँ तिमीहरूसित रहनुहुन्छ,
र तिमीहरूभित्र हुनुहुनेछ। १८ म तिमीहरूलाई
टुहुरा छोड्नेछैनँ, म तिमीहरूकहाँ आउनेछु।
१९ अझै केही समय छ, अनि संसारले मलाई
फेरि देख्दैन, तर तिमीहरूले मलाई देख्छौ। म
जिउँछु, यसकारण तिमीहरू पनि जिउनेछौ।
२० त्यस दिन तिमीहरूले, म मेरा पितामा छु, अनि
तिमीहरू ममा, र म तिमीहरूमा छु भनी जान्नेछौ।
२१ जससँग मेरा आज्ञाहरू छन् र तिनलाई पालन
गर्दछ, उही मलाई प्रेम गर्ने हो। अनि जसले
मलाई प्रेम गर्दछ, ऊ मेरा पिताद्वारा प्रेम गरिनेछ,
अनि म उसलाई प्रेम गर्नेछु, र आफैलाई उसकहाँ
प्रकट गर्नेछु।" २२ यहूदाले, जो इस्करयोती
होइन, उहाँलाई भनेः "प्रभु, के भएको छ, र
तपाईंले आफैलाई हामीकहाँ प्रकट गर्नुहुनेछ, तर
संसारकहाँ होइन?" २३ येशूले जवाफ दिएर
तिनलाई भन्नुभयोः "कसैले मलाई प्रेम गर्छ भने
उसले मेरा वचनहरू पालन गर्नेछ; अनि मेरा
पिताले उसलाई प्रेम गर्नुहुनेछ, अनि हामी
उसकहाँ आउनेछौं र हाम्रो वासस्थान ऊसँग
बनाउनेछौं। २४ जसले मलाई प्रेम गर्दैन, त्यसले
मेरा वचनहरू पालन गर्दैन; अनि जुन वचन
तिमीहरू सुन्छौ, त्यो मेरो होइन, तर पिताको हो,
जसले मलाई पठाउनुभयो। २५ तिमीहरूको
साथमा रहँदैखेरि यी कुराहरू मैले तिमीहरूलाई
भनेको छु। २६ तर शान्तिदाता, जो पवित्र
आत्मा हुनुहुन्छ, जसलाई पिताले मेरो नाममा
पठाउनुहुनेछ; उहाँले तिमीहरूलाई सबै कुराहरू
सिकाउनुहुनेछ, अनि जे-जे मैले तिमीहरूलाई
भनेको छु, तिमीहरूलाई यी सबै कुराहरूको
सम्झना गराउनुहुनेछ।

२७ शान्ति म तिमीहरूको साथमा छोड्छु,
मेरो शान्ति म तिमीहरूलाई दिन्छु, संसारले दिने
जस्तोचाहिँ म तिमीहरूलाई दिन्नँ। तिमीहरूको
हृदय विचलित नहोस्, नता भयभीत होस्। २८ म
जान्छु, अनि फेरि तिमीहरूकहाँ आउँछु भनी
मैले तिमीहरूलाई भनेको तिमीहरूले सुनेका छौ।
तिमीहरूले मलाई प्रेम गरेका भए तिमीहरू
रमाउनेथियौ, किनकि मैले 'म पिताकहाँ जान्छु'
भनी भनें; किनभने मेरा पिता मभन्दा महान्
हुनुहुन्छ। २९ अनि जब यो कुरा हुन आउँछ, तब
तिमीहरूले विश्वास गर्न सक भनेर नै यो कुरा हुन
आउनुभन्दा पहिल्यै मैले अहिले तिमीहरूलाई
भनेको छु। ३० म तिमीहरूसँग अब उसो धेरै कुरा
गर्नेछैनँ; किनकि यस संसारको शासक आउँदैछ,
अनि ममा त्यसको केही पनि छैन। ३१ तर म
पितालाई प्रेम गर्छु, अनि जस्तो आज्ञा पिताले
मलाई दिनुभयो, त्यस्तै म गर्छु भनी संसारले
जानोस्। उठ, हामी यहाँबाट जाऔं।"

## दाखको बोट र हाँगाहरू

१५ "साँचो दाखको बोट म नै हुँ, अनि मेरा
पिता किसान हुनुहुन्छ। २ ममा भएको फल

*१४:१६ ग्रीकमा 'पाराक्लेटोस', जसको अर्थ 'शान्तिदाता', 'सहायक' र 'विन्ती गरिदिने वकिल' हुन्छ

नफल्ने हरेक हाँगालाई उहाँले हटाउनुहुन्छ; र
फल फलाउने हरेक हाँगालाई, त्यसले अझ धेरै
फल फलोस् भनेर उहाँले छाँट्नुहुन्छ। ३ मैले
तिमीहरूलाई भनेको वचनद्वारा तिमीहरू शुद्ध
भइसकेका छौ। ४ ममा रहो, अनि म तिमीहरूमा।
जसरी हाँगाले दाखको बोटमा रहिरहेन भने
आफैआफ फल फलाउन सक्दैन, उसरी नै
तिमीहरू ममा रहिरहेनौ भने तिमीहरूले पनि
सक्दैनौ। ५ दाखको बोट म नै हुँ; तिमीहरूचाहिँ
हाँगा हौ। जो ममा रहन्छ, अनि म उसमा, उसैले
धेरै फल फलाउँछ; किनभने मबाट अलग भएर
तिमीहरूले केही पनि गर्न सक्दैनौ। ६ कोही
मानिस ममा रहेन भने ऊ हाँगाझैँ बाहिर
मिल्काइन्छ, र सुक्छ; अनि तिनीहरूले तिनलाई
जम्मा पार्छन् र आगोभित्र फालिदिन्छन्, र ती
जलाइन्छन्। ७ तिमीहरू ममा रह्यौ र मेरा वचन-
हरू तिमीहरूमा रहे भने तिमीहरू जे चाहन्छौ,
सो माग्नेछौ, र त्यो तिमीहरूका निम्ति गरिनेछ।
८ तिमीहरूले धेरै फल फलायौ भने, यसैमा मेरा
पिताको महिमा हुनेछ; र तिमीहरू मेरा चेला
हुनेछौ। ९ जसरी पिताले मलाई प्रेम गर्नुभएको छ,
उसरी नै मैले पनि तिमीहरूलाई प्रेम गरेको छु;
तिमीहरू मेरो प्रेममा रहिरहो। १० तिमीहरूले मेरा
आज्ञाहरू पालन गर्‍यौ भने तिमीहरू मेरो प्रेममा
रहनेछौ, जसरी मैले पनि मेरा पिताका आज्ञाहरू
पालन गरेको छु, अनि उहाँको प्रेममा रहन्छु।
११ मेरो आनन्द तिमीहरूमा रहोस्, र तिमीहरूको
आनन्द पूर्ण होस् भनेर नै मैले यी कुराहरू
तिमीहरूलाई भनेको हुँ। १२ जसरी मैले तिमी-
हरूलाई प्रेम गरेको छु, उसरी नै तिमीहरूले एक-
अर्कालाई प्रेम गर, यो मेरो आज्ञा हो। १३ आफ्ना
साथीहरूका निम्ति आफ्नो प्राण अर्पण गरिदिनु-
भन्दा ठूलो प्रेम अरू कसैको हुँदैन। १४ म
तिमीहरूलाई जे-जे आज्ञा गर्दछु, तिमीहरूले ती
पालन गर्‍यौ भने तिमीहरू मेरा साथी हौ।
१५ अब उसो म तिमीहरूलाई दास भन्दिनँ;
किनकि त्यसका मालिकले के गर्दछन्, सो दासले
जान्दैन; तर मैले तिमीहरूलाई साथी भनेको छु;
किनकि जे-जे कुराहरू मैले मेरा पिताबाट सुनेको
छु, ती सबै मैले तिमीहरूलाई थाह गराएको छु।
१६ तिमीहरूले मलाई चुनेनौ, तर मैले तिमी-
हरूलाई चुनें, अनि तिमीहरू जाओ र फल
फलाओ, र तिमीहरूको फल रहिरहोस् भनी
तिमीहरूलाई नियुक्त गरें; र तिमीहरूले पितालाई
मेरो नाममा जे मागौला, सो उहाँले तिमीहरूलाई
दिनुहुनेछ। १७ म तिमीहरूलाई यी कुराहरूको
आज्ञा गर्दछुः तिमीहरू एक-अर्कालाई प्रेम गर।"

## संसारले चेलाहरूलाई घृणा गर्दछ

१८ "संसारले तिमीहरूलाई घृणा गर्दछ भने
त्यसले तिमीहरूलाई भन्दा पहिले मलाई घृणा
गर्‍यो भनी तिमीहरू जान्दछौ। १९ तिमीहरू यस
संसारका हुँदा हौ ता संसारले आफ्नोलाई माया
गर्नेथ्यो, तर तिमीहरू यस संसारका होइनौ, तर
मैले तिमीहरूलाई संसारबाट चुनें; यसकारण
संसारले तिमीहरूलाई घृणा गर्दछ। २० दास
आफ्नो मालिकभन्दा ठूलो हुँदैन भनी मैले
तिमीहरूलाई भनेको वचन याद गर। तिनीहरूले
मलाई सताएका छन् भने तिनीहरूले तिमीहरूलाई
पनि सताउनेछन्। तिनीहरूले मेरो वचन पालन
गरेका छन् भने तिनीहरूले तिमीहरूको पनि पालन
गर्नेछन्। २१ तर यी सबै कुराहरू तिनीहरूले मेरो
नामको कारणले तिमीहरूसँग गर्नेछन्, किनभने
तिनीहरूले मलाई पठाउनुहुनेलाई चिन्दैनन्।
२२ म नआएको भए र तिनीहरूलाई नभनेको
भएदेखि तिनीहरूसँग पाप हुनेथिएन; तर अब ता
आफ्नो पापका लागि तिनीहरूसँग कुनै बहाना
छैन। २३ जसले मलाई घृणा गर्दछ, त्यसले मेरा
पितालाई पनि घृणा गर्दछ। २४ जुन कामहरू

अरू कसैले गरेको छैन, ती कामहरू मैले
तिनीहरूका बीचमा नगरेको भएदेखि तिनीहरूसँग
पाप हुनेथिएन; तर अब तिनीहरूले देखेका छन्,
अनि मलाई र मेरा पिता दुवैलाई घृणा गरेका
छन्। २५ तर तिनीहरूकै व्यवस्थामा लेखिएको,
'तिनीहरूले मलाई बिनाकारण घृणा गरे'* भन्ने
वचन पूरा होओस् भनी यो भएको हो। २६ तर
जब शान्तिदाता आउनुहुन्छ, जसलाई म पिताका
तर्फबाट तिमीहरूकहाँ पठाउनेछु अर्थात् सत्यका
आत्मा, जो पिताबाट निस्कनुहुन्छ; तब उहाँले
मेरो विषयमा गवाही दिनुहुनेछ। २७ अनि
तिमीहरूले पनि गवाही दिनेछौ, किनभने
तिमीहरू शुरुदेखि मसँग रहेका छौ।"

**१६** "तिमीहरूलाई ठेस नलागोस् भनी मैले यी
कुराहरू तिमीहरूलाई भनेको छु। २ तिनीहरूले
तिमीहरूलाई सभाघरहरूबाट निकालिदिनेछन्;
अँ, यस्तो समय आउँछ – जसले तिमीहरूलाई
मार्दछ, त्यसले परमेश्वरको सेवा गरें भनी
ठान्नेछ। ३ अनि तिनीहरूले यी कुराहरू
तिमीहरूसँग गर्नेछन्; किनकि तिनीहरूले न ता
पितालाई चिनेका छन्, न मलाई। ४ तर जब
त्यो समय आउला, तब मैले तिमीहरूलाई
तिनीहरूको विषयमा भनेको थिएँ भनी
तिमीहरूलाई तिनको सम्झना होओस् भनेर
मैले यी कुराहरू तिमीहरूलाई भनिराखेको हुँ।
अनि शुरुमा मैले यी कुराहरू तिमीहरूलाई
भनिनँ, किनभने म तिमीहरूकै साथमा थिएँ।"

## पवित्र आत्माको काम

५ "तर अब म मलाई पठाउनुहुनेकहाँ
जान्छु; अनि 'तपाईं कहाँ जानुहुन्छ?' भनी
तिमीहरूमध्ये कसैले पनि मलाई सोध्दैन। ६ तर
यी कुराहरू मैले तिमीहरूलाई भनेको हुनाले
तिमीहरूको हृदय शोकले भरिएको छ। ७ तापनि
म तिमीहरूलाई सत्य कुरा भन्दछु, म गएकोमा
नै तिमीहरूलाई फाइदा छ; किनकि म गइनँ भने
शान्तिदाता तिमीहरूकहाँ आउनुहुनेछैन; तर म गएँ
भने म उहाँलाई तिमीहरूकहाँ पठाउनेछु। ८ अनि
जब उहाँ आउनुहुन्छ, तब उहाँले संसारलाई
पापको विषयमा, धार्मिकताको विषयमा र
न्यायको विषयमा कायल पार्नुहुनेछ। ९ पापको
विषयमा – किनभने तिनीहरूले ममाथि विश्वास
गर्दैनन्। १० धार्मिकताको विषयमा – किनभने म
मेरा पिताकहाँ जान्छु, अनि तिमीहरूले मलाई
फेरि देख्दैनौ। ११ न्यायको विषयमा – किनभने
यस संसारको शासकको न्याय गरिएको छ।
१२ तिमीहरूलाई भन्नुपर्ने कुराहरू मसँग अझै
धेरै छन्, तर तिमीहरू तिनलाई अहिले सहन
सक्दैनौ। १३ तापनि जब उहाँ अर्थात् सत्यको
आत्मा आउनुहुन्छ, तब उहाँले तिमीहरूलाई सबै
सत्यताभित्र डोऱ्याउनुहुनेछ; किनभने उहाँले
आफ्नै तर्फबाट बोल्नुहुनेछैन, तर जे उहाँले
सुन्नुहुनेछ, त्यही बोल्नुहुनेछ; अनि उहाँले
तिमीहरूलाई आउने कुराहरू बताउनुहुनेछ।
१४ उहाँले मेरो महिमा गर्नुहुनेछ; किनभने जे मेरो
छ, त्यहीबाट उहाँले प्राप्त गर्नुहुनेछ र तिमी-
हरूलाई बताइदिनुहुनेछ। १५ पितासँग भएका
सबै थोक मेरा हुन्; यही कारणले मैले भनें,
'जे मेरो छ, त्यहीबाट उहाँले प्राप्त गर्नुहुनेछ र
तिमीहरूलाई बताइदिनुहुनेछ।' १६ एकै छिन,
अनि तिमीहरूले मलाई देख्नेछैनौ; अनि फेरि
एकै छिन, अनि तिमीहरूले मलाई देख्नेछौ;
किनकि म पिताकहाँ जान्छु।"
१७ तब उहाँका केही चेलाहरूले आपसमा
कुरा गरेः "यो के हो, जो उहाँले हामीलाई
भन्नुहुन्छ, 'एकै छिन, अनि तिमीहरूले मलाई
देख्नेछैनौ; अनि फेरि एकै छिन, अनि तिमीहरूले

*१५:२५ भजन ३५:१९

मलाई देख्नेछौ' र 'किनकि म पिताकहाँ
जान्छु ?'" १८ यसकारण तिनीहरूले भने: "उहाँ
भन्नुहुन्छ, 'एकै छिन', यो के हो ? उहाँ के
भन्नुहुन्छ, हामी बुझ्न सक्दैनौं।" १९ अब
तिनीहरूले उहाँलाई सोध्ने इच्छा गरेका छन् भन्ने
थाह पाएर येशूले तिनीहरूलाई भन्नुभयो: "एकै
छिन, अनि तिमीहरूले मलाई देख्नेछैनौ, अनि
फेरि एकै छिन, अनि तिमीहरूले मलाई देख्नेछौ
भनी मैले भनेको विषयमा के तिमीहरू आपसमा
सोधासोध गर्छौ ? २० साँचो-साँचो म तिमीहरूलाई
भन्दछु, तिमीहरू रुनेछौ र विलाप गर्नेछौ, तर
संसारचाहिँ रमाउनेछ; अनि तिमीहरू शोकित
हुनेछौ, तर तिमीहरूको शोक आनन्दमा बदली
हुनेछ। २१ स्त्री प्रसूति-वेदना हुँदा शोकित हुन्छे,
किनकि उसको समय आइपुगेको हुन्छ; तर
बालक जन्मनासाथ संसारमा एउटा मानिसको
जन्म भयो भन्ने आनन्दको कारणले गर्दा उसले
त्यस व्यथालाई फेरि सम्झना गर्दिन। २२ अनि
यसैकारण अहिले तिमीहरूलाई शोक त हुन्छ; तर
म तिमीहरूलाई फेरि भेट्नेछु, र तिमीहरूको हृदय
आनन्दित हुनेछ, अनि तिमीहरूको आनन्द कसैले
तिमीहरूबाट खोसेर लैजाँदैन। २३ अनि त्यस
दिन तिमीहरूले मलाई केही पनि सोध्नेछैनौ।
साँचो-साँचो म तिमीहरूलाई भन्दछु, तिमीहरूले
पितालाई मेरो नाममा जे पनि माग्नेछौ, त्यो
उहाँले तिमीहरूलाई दिनुहुनेछ। २४ अहिलेसम्म
तिमीहरूले मेरो नाममा केही पनि मागेका छैनौ;
माग, र तिमीहरूको आनन्द पूरा होओस् भनेर
तिमीहरूले पाउनेछौ। २५ यी कुराहरू मैले
तिमीहरूलाई दृष्टान्तहरूमा भनेको छु। तर समय
आउँछ, तब म तिमीहरूसित दृष्टान्तहरूमा फेरि
बोल्नेछैनँ, तर म तिमीहरूलाई पिताको विषयमा
सफासँग बताउनेछु। २६ त्यस दिन तिमीहरूले
मेरो नाममा माग्नेछौ, अनि तिमीहरूका निम्ति म
पितालाई प्रार्थना गर्नेछु भनी म तिमीहरूलाई
भन्दिनँ। २७ किनकि पिता आफैले तिमीहरूलाई
प्रेम गर्नुहुन्छ; किनकि तिमीहरूले मलाई प्रेम
गरेका छौ, अनि मचाहिँ परमेश्वरबाट निस्की
आएको हुँ भनी विश्वास गरेका छौ। २८ म
पिताबाट निस्कें, अनि संसारमा आएको छु; फेरि
म संसारलाई छोड्छु, र पिताकहाँ जान्छु।"

२९ उहाँका चेलाहरूले उहाँलाई भने:
'हेर्नुहोस्, अब तपाईं सफासँग बोल्नुहुन्छ, अनि
केही पनि दृष्टान्त भन्नुहुन्न। ३० अब तपाईं सबै
थोक जान्नुहुन्छ, अनि कसैले तपाईंलाई सोध्ने
खाँचो छैन भनी हामी जान्दछौं; यही कुराद्वारा
तपाईंचाहिँ परमेश्वरबाट निस्की आउनुभयो भनी
हामी विश्वास गर्दछौं।" ३१ येशूले तिनीहरूलाई
जवाफ दिनुभयो: "के अब तिमीहरू विश्वास
गर्दछौ ? ३२ हेर, त्यो घड़ी आउँछ, अँ, अहिले
आइपुगेको छ; तिमीहरू हरेक आ-आफ्नो
ठाउँतिर तितरबितर हुनेछौ, अनि मलाई एक्लै
छोड्नेछौ। तरै पनि म एक्लो छैनँ, किनभने पिता
मसँग हुनुहुन्छ। ३३ ममा तिमीहरूलाई शान्ति
मिलोस् भनेर यी कुराहरू मैले तिमीहरूलाई
भनेको हुँ। संसारमा तिमीहरूलाई सङ्कष्ट हुनेछ;
तर साहस गर, मैले संसारलाई जितेको छु।"

## प्रभुको अन्तर्विन्ती

१७ येशूले यी कुराहरू बोल्नुभयो, आफ्ना
आँखा स्वर्गतिर उठाउनुभयो र भन्नुभयो: "हे
पिता, समय आइपुगेको छ; तपाईंका पुत्रको
महिमा गर्नुहोस्, र तपाईंका पुत्रले पनि तपाईंको
महिमा गरून्; २ किनकि तपाईंले उनलाई
जतिजना दिनुभएको छ, ती सबैलाई उनले
अनन्त जीवन दिऊन् भनी तपाईंले उनलाई सबै
प्राणीमाथि* अधिकार दिनुभएको छ। ३ अनि
तिनीहरूले तपाईं एक मात्र सत्य परमेश्वरलाई र

*१७:२ ग्रीकमा 'शरीरमाथि';

तपाईंले पठाउनुभएको येशू ख्रीष्टलाई चिनून् –
अनन्त जीवन यही हो। ४ मैले पृथ्वीमा तपाईंको
महिमा गरेको छु; तपाईंले मलाई जुन काम गर्न
दिनुभएको थियो, सो मैले गरी सिद्ध्याएको छु।
५ अनि हे पिता, संसार हुनुभन्दा पहिले तपाईं-
सित जुन मेरो महिमा थियो, त्यही महिमाले
अब तपाईंले आफूसितै मेरो महिमा गर्नुहोस्।

६ मैले ती मानिसहरूकहाँ तपाईंको नाम
प्रकट गरिदिएको छु; जसलाई तपाईंले यस
संसारबाट मलाई दिनुभयो; तिनीहरू तपाईंका
थिए, अनि तिनीहरूलाई तपाईंले मलाई
दिनुभयो, अनि तिनीहरूले तपाईंको वचन पालन
गरेका छन्। ७ सबै कुराहरू जो तपाईंले मलाई
दिनुभएको छ, ती तपाईंबाटकै हुन् भनी
तिनीहरूले अब जानेका छन्। ८ किनभने जुन
वचनहरू तपाईंले मलाई दिनुभयो, ती मैले
तिनीहरूलाई दिएको छु; अनि तिनीहरूले ती
ग्रहण गरेका छन्, अनि मचाहिँ तपाईंबाट निस्की
आएँ भनी तिनीहरूले पक्का गरी जानेका छन्;
अनि तपाईंले मलाई पठाउनुभयो भनी तिनी-
हरूले विश्वास गरेका छन्। ९ म तिनीहरूका
निम्ति प्रार्थना गर्दछु; म यस संसारका निम्ति
प्रार्थना गर्दिनँ, तर तिनीहरूका निम्ति, जसलाई
तपाईंले मलाई दिनुभएको छ; किनकि तिनीहरू
तपाईंकै हुन्। १० अनि जति मेरा छन्, सब तपाईंकै
हुन्, अनि तपाईंका चाहिँ मेरा हुन्; अनि म
तिनीहरूमा महिमित भएको छु। ११ अनि अब
उसो म संसारमा हुँदिनँ, तर तिनीहरूचाहिँ
संसारमा हुन्छन्, अनि म तपाईंकहाँ आउँछु।
पवित्र पिता, तपाईंले मलाई जतिजना दिनु-
भएको छ, तिनीहरूलाई तपाईंको नामद्वारा रक्षा
गर्नुहोस्, र तिनीहरू पनि हामीझैं एक होऊन्।
१२ जब म तिनीहरूसँग संसारमा थिएँ, तब मैले
तिनीहरूलाई तपाईंकै नाममा रक्षा गरें; तपाईंले
मलाई जतिजना दिनुभयो, तिनीहरूलाई मैले
रक्षा गरें, अनि पवित्रशास्त्र पूरा होओस् भनेर
तिनीहरूमध्ये विनाशको पुत्रबाहेक अरू कोही
पनि नष्ट भएन। १३ अनि अब म तपाईंकहाँ
आउँछु; अनि मेरो आनन्द तिनीहरूमा पूरा होओस्
भनेर म संसारमा यी कुराहरू भन्दछु। १४ मैले
तिनीहरूलाई तपाईंको वचन दिएको छु; अनि
संसारले तिनीहरूलाई घृणा गरेको छ; किनकि
जसरी म संसारको होइनँ, उसरी नै तिनीहरू
पनि संसारका होइनन्। १५ तिनीहरूलाई यस
संसारबाट लैजानुहोस् भनी म प्रार्थना गर्दिनँ, तर
तिनीहरूलाई दुष्टबाट रक्षा गर्नुहोस् भनी गर्दछु।
१६ जसरी म यस संसारको होइनँ, उसरी नै
तिनीहरू पनि यस संसारका होइनन्। १७ तपाईंको
सत्यद्वारा तिनीहरूलाई पवित्र* पार्नुहोस्;
तपाईंको वचन सत्य हो। १८ जसरी तपाईंले
मलाई संसारमा पठाउनुभएको छ, उसरी नै मैले
पनि तिनीहरूलाई संसारमा पठाएको छु। १९ अनि
तिनीहरू पनि सत्यद्वारा पवित्र* होऊन् भनी म
आफूलाई तिनीहरूका निम्ति पवित्र* गर्दछु।

२० म तिनीहरूका लागि मात्र प्रार्थना गर्दिनँ,
तर उनीहरूका लागि पनि गर्दछु, जसले
तिनीहरूको वचनद्वारा ममाथि विश्वास गर्नेछन्;
२१ र तिनीहरू सब एक होऊन्; जसरी हे पिता,
तपाईं ममा हुनुहुन्छ अनि म तपाईंमा, उसरी नै
तिनीहरू पनि हामीमा एक होऊन्; र तपाईंले
मलाई पठाउनुभयो भनी संसारले विश्वास गरोस्।
२२ अनि जसरी हामी एक छौं, उसरी नै तिनीहरू
पनि एक होऊन् भनेर तपाईंले मलाई दिनुभएको
महिमा मैले तिनीहरूलाई दिएको छु। २३ म
तिनीहरूमा अनि तपाईं ममा, कि तिनीहरू सिद्ध
बनाइएर एक होऊन्; अनि तपाईंले मलाई
पठाउनुभएको हो, अनि जसरी तपाईंले मलाई प्रेम
गर्नुभएको छ, उसरी नै तिनीहरूलाई पनि प्रेम

*१७:१७,१९ ग्रीक शब्द 'हागिअजो' को अर्थ पवित्र कार्यका निम्ति अलग पारिनु हो

गर्नुभएको छ भनी संसारले जानोस्। २४ हे पिता,
तपाईंले मलाई जतिजना दिनुभएको छ, तिनीहरू
पनि म जहाँ छु, त्यहीं मसँगै रहून् भन्ने इच्छा म
गर्दछु; र तपाईंले मलाई दिनुभएको मेरो महिमा
तिनीहरूले देखून्; किनकि तपाईंले मलाई
संसारको उत्पत्तिभन्दा पहिल्यै प्रेम गर्नुभयो।
२५ हे धार्मिक पिता, संसारले तपाईंलाई
चिनेको छैन; तर मैले तपाईंलाई चिनेको छु; अनि
तपाईंले मलाई पठाउनुभएको हो भनी
तिनीहरूले जानेका छन्। २६ अनि मैले तपाईंको
नाम तिनीहरूलाई जनाइदिएको छु, अनि
जनाइदिनेछु, र जुन प्रेमले तपाईंले मलाई प्रेम
गर्नुभएको छ, त्यही प्रेम तिनीहरूमा रहोस् र
म तिनीहरूमा रहूँ।"

## प्रभु येशू पक्राउ पर्नुहुन्छ

मत्ती २६:४७-५६; मर्कूस १४:४३-५०;
लूका २२:४७-५३

**१८** यी कुराहरू भनेपछि येशू आफ्ना
चेलाहरूसित किद्रोन खोल्सापारि जानुभयो, जहाँ
एउटा बगैंचा थियो, त्यसभित्र उहाँ र उहाँका
चेलाहरू पस्नुभयो। २ अनि उहाँलाई पक्राइदिने
यहूदालाई पनि त्यो ठाउँ थाह थियो, किनकि
येशू आफ्ना चेलाहरूसित त्यहाँ घरीघरी भेला
हुनुहुन्थ्यो। ३ तब सिपाहीहरूको एक टोली, र
मुख्य पूजाहारी र फरिसीहरूपट्टिबाट अफिसरहरू
पाएर यहूदा बत्तीहरू, राँकाहरू र हतियारहरू
लिई त्यहाँ आयो।
४ यसकारण येशूले, आफूमाथि आइपर्ने
सबै कुराहरू थाह पाएर अघि बढ्नुभयो र
तिनीहरूलाई भन्नुभयो: "तिमीहरू कसलाई
खोज्छौ?" ५ तिनीहरूले उहाँलाई जवाफ दिए:
"नासरतको येशूलाई।" येशूले तिनीहरूलाई
भन्नुभयो: "म उही हुँ।" अनि उहाँलाई पक्राइदिने
यहूदा पनि तिनीहरूसँग उभिएको थियो। ६ तब
उहाँले तिनीहरूलाई 'म उही हुँ' भन्नासाथ तिनीहरू
पछि हटेर भुइँमा पछारिए। ७ तब उहाँले
तिनीहरूलाई फेरि सोध्नुभयो: "तिमीहरू
कसलाई खोज्छौ?" अनि तिनीहरूले भने:
"नासरतको येशूलाई।" ८ येशूले जवाफ
दिनुभयो: "म उही हुँ भनी मैले तिमीहरूलाई
भनेको छु। यसकारण तिमीहरू मलाई खोज्छौ
भने यिनीहरूलाई चाहिँ जान देओ।" ९ 'तपाईंले
मलाई जतिजना दिनुभयो, तिनीहरूमध्ये कसैलाई
पनि मैले हराइनँ' भनी उहाँले भन्नुभएको वचन
पूरा होस् भनेर नै यस्तो भयो। १० तब शिमोन
पत्रुसले, तरवार भएको हुनाले त्यसलाई निकालेर
महापूजाहारीको दासलाई हिर्काए र त्यसको
दाहिने कान च्वाट्टै काटिदिए। त्यस दासको नाम
मालकस थियो। ११ तब येशूले पत्रुसलाई
भन्नुभयो: "आफ्नो तरवार म्यानभित्र हाल; के
म मेरा पिताले मलाई दिनुभएको यो कचौरा
नपिऊँ?"
१२ तब सिपाहीहरूको त्यस टोली, अनि
कप्तान र यहूदीहरूका अफिसरहरूले येशूलाई
पक्रे; र उहाँलाई बाँधे। १३ अनि तिनीहरूले
उहाँलाई पहिले हन्नासकहाँ लगे, किनकि उनी
त्यस सालका महापूजाहारी कायफाका ससुरा
थिए। १४ अनि 'यस जनताका निम्ति एकजना
मानिस मर्नु नै फाइदा छ' भनी यहूदीहरूलाई
सल्लाह दिने यिनै कायफा थिए। १५ अनि
शिमोन पत्रुस येशूको पछि-पछि लागे, अनि
अर्को एकजना चेलाले पनि त्यसै गरे। अब ती
चेलाचाहिँ महापूजाहारीका चिनारु थिए, अनि
येशूसँगै महापूजाहारीको चोकभित्र पसे।

## पत्रुसले प्रभुलाई इन्कार गर्छन्

१६ तर पत्रुसचाहिँ बाहिर ढोकामा उभिए।
तब अर्को चेलाचाहिँ, जो महापूजाहारीका चिनारु
थिए, बाहिर गए र ढोकामा पहरा बस्ने स्त्रीसँग

कुरा गरे, अनि पत्रुसलाई भित्र ल्याए। १७ तब
ढोकामा पहरा बस्ने नोकरनीले पत्रुसलाई भनीः
"के तिमी पनि यस मानिसका चेलाहरूमध्ये
एउटा होइनौ र?" उनले भनेः "म ता होइनँ।"
१८ अनि दास र अफिसरहरू कोइलाको आगो
सल्काएर उभिरहेका थिए; किनकि जाड़ो थियो,
र तिनीहरू आगो तापिरहेका थिए; अनि पत्रुस
पनि तिनीहरूसँगै उभिरहेका र आगो तापिरहेका
थिए।

१९ तब महापूजाहारीले येशूलाई उहाँका
चेलाहरू र उहाँको शिक्षाको विषयमा सोधे।
२० येशूले उनलाई जवाफ दिनुभयोः "मैले
संसारलाई खुल्लमखुल्ला बताएँ; मैले सधैं
सभाघरमा र मन्दिरमा शिक्षा दिएँ, जहाँ यहूदीहरू
सधैं भेला हुन्छन्; अनि गुप्तमा मैले केही पनि
भनेको छैनँ। २१ तपाईं मलाई किन सोध्नुहुन्छ?
तिनीहरूलाई सोध्नुहोस्, जसले, मैले तिनी-
हरूलाई जे-जे भनेको थिएँ, सो सुनेका छन्।
हेर्नुहोस्, मैले के-के भनें, तिनीहरूलाई थाह
छ।" २२ तर उहाँले यी कुराहरू भन्नुहुँदा नजिक-
मा उभिरहेका अफिसरहरूमध्ये एकजनाले
येशूलाई यसो भन्दै थप्पड़ लगायोः "के तँ
महापूजाहारीलाई यसरी नै जवाफ दिन्छस्?"
२३ येशूले त्यसलाई जवाफ दिनुभयोः "मैले
खराब बोलेको छु भने खराब कुराको विषयमा
गवाही देऊ; तर ठीक बोलेको छु भने तिमी
मलाई किन हिर्काउँछौ?" २४ अब हन्नासले
उहाँलाई महापूजाहारी कायफाकहाँ बाँधिएकै
अवस्थामा पठाएका थिए।

२५ अनि शिमोन पत्रुस उभिएर आगो
तापिरहेका थिए। यसकारण तिनीहरूले उनलाई
भनेः "के तिमी पनि उसका चेलाहरूमध्ये
एकजना होइनौ र?" उनले इन्कार गरे, अनि भनेः
"म ता होइनँ।" २६ महापूजाहारीका दासहरूमध्ये
एकजनाले, जोचाहिँ पत्रुसद्वारा कान काटिएको
मानिसको आफन्त थियो, भन्योः "के मैले
तिमीलाई बगैंचामा उसैको साथमा देखिनँ र?"
२७ तब पत्रुसले फेरि इन्कार गरे; अनि तुरुन्तै
भाले बास्यो।

## प्रभु येशू पिलातसको सामु

मत्ती २७:१-२, ११-१४; मर्कूस १५:१-५;
लूका २३:१-५

२८ त्यसपछि तिनीहरूले येशूलाई कायफा-
कहाँबाट राजभवनमा* लगे, अनि बिहानी पख
थियो। अनि अशुद्ध नहोऔं, तर निस्तार-चाड़को
भोज खान सकौं भनेर तिनीहरू आफैचाहिँ
राजभवनभित्र पसेनन्। २९ यसकारण पिलातस
बाहिर तिनीहरूकहाँ गए, र भनेः "यस मानिसको
विरोधमा तिमीहरू के आरोप लाउँछौ?"
३० तिनीहरूले जवाफ दिएर उनलाई भनेः "ऊ
कुकर्मी नहुँदो हो ता हामीले उसलाई तपाईंकहाँ
सुम्पिनेथिएनौं।" ३१ तब पिलातसले तिनीहरूलाई
भनेः "तिमीहरू उसलाई लैजाओ, र आफ्नै
व्यवस्थाअनुसार उसको न्याय गर।" यसकारण
यहूदीहरूले उनलाई भनेः "कसैको प्राण लिनु
हामीलाई अधिकार छैन;" ३२ कस्तो मृत्युले उहाँ
मर्न लाग्नुभएको थियो, त्यसलाई सङ्केत गर्दै
येशूले भन्नुभएको वचन पूरा होओस् भनेर
यस्तो भइरहेको थियो।

३३ तब पिलातस फेरि राजभवनभित्र पसे,
अनि येशूलाई बोलाए, र उहाँलाई भनेः "के तिमी
यहूदीहरूका राजा हौ?" ३४ येशूले उनलाई
जवाफ दिनुभयोः "के तपाईंले आफ्नैपट्टिबाट
यो कुरा भन्दै हुनुहुन्छ, कि अरूले मेरो विषयमा
तपाईंलाई यो कुरा बताए?" ३५ पिलातसले
जवाफ दिएः "के म यहूदी हुँ र? तिम्रो आफ्नै
जातिले र मुख्य पूजाहारीहरूले तिमीलाई मकहाँ

*१८:२८ हेर्नुहोस् मत्ती २७:२७

सुम्पेका छन्। तिमीले के गरेका छौ?" ३६ येशूले
जवाफ दिनुभयोः "मेरो राज्य यस संसारको
होइन। मेरो राज्य यस संसारको हुँदो हो ता म
यहूदीहरूकहाँ नसुम्पिइऊँ भनी मेरा सेवकहरूले
लड़ाइँ गर्नेथिए; तर अब मेरो राज्य यहाँबाटको
होइन।" ३७ यसकारण पिलातसले उहाँलाई भनेः
"तब के तिमी राजा हौ त?" येशूले जवाफ
दिनुभयोः "म राजा हुँ भनी तपाईं नै भन्नुहुन्छ।
सत्यका विषयमा गवाही दिऊँ भनेर, यसैका
निम्ति म जन्मिएँ र यसैका निम्ति नै म संसारमा
आएँ। हरेकले, जो सत्यको हो, मेरो सोर सुन्छ।"
३८ पिलातसले उहाँलाई भनेः "सत्य के हो?"
अनि यसो भनेपछि उनी फेरि बाहिर यहूदी-
हरूकहाँ गए, र तिनीहरूलाई भनेः "म उसमा
एउटै पनि दोष पाउँदिनँ। ३९ तर निस्तारचाड़मा
तिमीहरूका निम्ति एकजनालाई मैले छोड़ि-
दिनुपर्ने तिमीहरूको एउटा दस्तुर छ। यसकारण
तिमीहरूका निम्ति मैले यहूदीहरूका राजालाई
छोड़िदिएको के तिमीहरू चाहन्छौ?" ४० तब
फेरि तिनीहरू सबै यसो भन्दै कराएः "यस
मान्छेलाई होइन, तर बरब्बालाई!" अब बरब्बा-
चाहिँ एउटा डाँकू थियो।

## प्रभु येशूको न्याय

मत्ती २७:१५-३१; मर्कूस १५:६-१५;
लूका २३:१३-२५

१९ तब पिलातसले येशूलाई लगे र कोर्रा
लगाए। २ अनि सिपाहीहरूले काँड़ाको मुकुट
गाँथेर उहाँको शिरमा लगाइदिए, अनि उहाँलाई
बैजनी रङ्गको वस्त्र पहिराइदिए, ३ र भनेः
"सलाम, यहूदीहरूको राजा!" अनि तिनीहरूले
उहाँलाई थप्पड़ लगाए। ४ यसकारण पिलातस
फेरि बाहिर गए, र तिनीहरूलाई भनेः "हेर,
मचाहिँ उसमा केही पनि दोष पाउँदिनँ भन्ने कुरा
तिमीहरूलाई थाह होस् भनेर म उसलाई बाहिर
तिमीहरूकहाँ ल्याउँछु।" ५ तब येशू काँड़ाहरूको
मुकुट र बैजनी वस्त्र पहिरेर बाहिर निस्कनुभयो।
अनि पिलातसले तिनीहरूलाई भनेः "हेर यो
मानिस!" ६ यसकारण जब मुख्य पूजाहारी र
अफिसरहरूले उहाँलाई देखे, तब तिनीहरू यसो
भन्दै कराएः "त्यसलाई क्रूसमा टाँग्नुहोस्!
त्यसलाई क्रूसमा टाँग्नुहोस्!!" पिलातासले
तिनीहरूलाई भनेः "तिमीहरूले नै उसलाई लगेर
क्रूसमा टाँग, किनकि मचाहिँ उसमा केही दोष
पाउँदिनँ।" ७ यहूदीहरूले उनलाई जवाफ दिएः
"हामीसँग व्यवस्था छ, अनि हाम्रो व्यवस्था-
अनुसार त्यो मर्नैपर्छ; किनभने त्यसले आफैलाई
परमेश्वरका पुत्र तुल्यायो।"

८ यसकारण जब पिलातसले यो कुरा सुने,
तब उनी झन् डराए; ९ अनि फेरि राजभवनभित्र
पसे, र येशूलाई भनेः "तिमी कहाँका हौ?" तर
येशूले उनलाई कुनै जवाफ दिनुभएन। १० तब
पिलातसले उहाँलाई भनेः "के तिमी मसित
बोल्दैनौ? तिमीलाई क्रूसमा टँगाउने अधिकार
मसित छ, र तिमीलाई छोड़िदिने अधिकार पनि
मसित छ भन्ने कुरा के तिमीलाई थाह छैन?"
११ येशूले जवाफ दिनुभयोः "तपाईंलाई माथिबाट
नदिइएको भए मेरो विरोधमा तपाईंसित कुनै पनि
अधिकार हुनेथिएन; यसैकारण जसले मलाई
तपाईंकहाँ सुम्पिदियो, त्यसैलाई झन् ठूलो पाप
लाग्छ।" १२ अनि त्यस बेलादेखि पिलातसले
उहाँलाई छोड़िदिन खोजे; तर यहूदीहरू यसो भन्दै
कराएः "यस मानिसलाई तपाईंले छोड़िदिनुभयो
भने तपाईं सिजरका साथी हुनुहुन्न; जसले
आफूलाई राजा तुल्याउँछ, उसले सिजरको
विरोधमा बोल्छ।"

१३ यसकारण जब पिलातसले यो कुरा सुने,
तब उनले येशूलाई बाहिर ल्याए अनि 'चौतारा'*,

*१९:१३ चौतारा – रङ्गीन ढुङ्गा बिछ्याएर बनाइएको मञ्च

तर हिब्रू भाषामा 'गब्बथा' भनिने ठाउँमा
न्यायआसनमाथि बसे। १४ अनि योचाहिँ निस्तार-
चाड़को तयारीको दिन थियो, अनि समय प्रायः
६ बजे* भएको थियो; अनि उनले यहूदीहरूलाई
भनेः "हेर तिमीहरूका राजा!" १५ तर तिनीहरू
चिच्च्याएः "हटाउनुहोस्! हटाउनुहोस्! त्यसलाई
क्रूसमा टाँग्नुहोस्!!" पिलातसले तिनीहरूलाई
भनेः "के तिमीहरूका राजालाई म क्रूसमा
टाँगूँ?" मुख्य पूजाहारीहरूले जवाफ दिएः
"सिजरबाहेक हाम्रो अरू राजा नै छैन।"

## प्रभु येशू क्रूसमा

मत्ती २७:३२-४४; मर्कूस १५:२१-३२;
लूका २३:२६-४३

१६ तब क्रूसमा टँगाइनका निम्ति उनले
उहाँलाई तिनीहरूको हातमा सुम्पिदिए। अनि
तिनीहरूले येशूलाई पक्रे, र उहाँलाई लिएर गए।
१७ अनि उहाँ आफ्नो क्रूस बोकेर 'खोपड़ी' भनिने
ठाउँतिर जानुभयो, जसलाई हिब्रू भाषामा
'गलगथा' भनिन्छ, १८ जहाँ तिनीहरूले उहाँलाई
क्रूसमा टाँगे, अनि उहाँको साथमा अरू
दुईजनालाई पनि; एउटालाई यतापट्टि, अर्कालाई
उतापट्टि, र माझमा येशूलाई।

१९ अनि पिलातसले एउटा दोषपत्र लेखे,
र त्यसलाई क्रूसमा टाँसिदिए। अनि यस्तो
लेखिएको थियो – 'नासरतका येशू, यहूदीहरूका
राजा।' २० तब धेरै यहूदीहरूले यो दोषपत्र पढ़े;
किनभने येशू क्रूसमा टँगाइनुभएको ठाउँ
शहरको नजिकमा थियो; अनि यो हिब्रू, ग्रीक र
ल्याटिन भाषामा लेखिएको थियो। २१ तब
यहूदीहरूका मुख्य पूजाहारीहरूले पिलातसलाई
भनेः "'यहूदीहरूका राजा' होइन, तर 'उसले "म
यहूदीहरूका राजा हुँ" भन्थ्यो' भनी लेखि-
दिनुहोस्।" २२ पिलातसले जवाफ दिएः "मैले जे
लेखें, लेखें।"

२३ तब सिपाहीहरूले येशूलाई क्रूसमा
टाँगेपछि उहाँका वस्त्रहरू लिएर हरेक सिपाहीका
लागि एक-एक भाग हुने गरी चार भाग लगाए;
अनि अलखा पनि। तर अलखाचाहिँ सिउनी-
बिनाको, माथिदेखि तलसम्म बुनिएको थियो।
२४ यसकारण तिनीहरूले आपसमा भनेः "हामी
यसलाई नच्यातौं, तर यसका लागि चिट्ठा हालौं,
यो कसको हुनेरहेछ।" यो पवित्रशास्त्र पूरा होस्
भनेर हो, जसले भन्दछः

'तिनीहरूले मेरा वस्त्रहरू आपसमा
बाँड़े, र मेरा पोसाकका निम्ति चिट्ठा
लगाए;'*

यसैकारण सिपाहीहरूले यी कुराहरू गरे।
२५ अनि येशूको क्रूसको छेवैमा उहाँकी आमा,
अनि उहाँकी आमाकी बहिनी, क्लिओफसकी
पत्नी मरियम, र मरियम मग्दलिनी उभिरहेका
थिए। २६ यसकारण जब येशूले आफ्नी आमा र
त्यस चेलालाई, जसलाई उहाँले प्रेम गर्नुहुन्थ्यो,
छेवैमा उभिरहेका देख्नुभयो, तब उहाँले आफ्नी
आमालाई भन्नुभयोः "हे नारी, हेर्नुहोस्, तपाईंको
छोरो!" २७ तब येशूले त्यस चेलालाई भन्नुभयोः
"हेर, तिम्री आमा!" अनि त्यस समयदेखि
त्यस चेलाले उनलाई आफ्नै घरमा लगे।

२८ त्यसपछि, अब सबै कुरा पूरा भइसके
भनी जानेर पवित्रशास्त्र पूरा होस् भनी येशूले
भन्नुभयोः "मलाई तिर्खा लाग्यो!"* २९ अब
सिर्काले भरिएको एउटा भाँड़ा त्यहीं राखिएको
थियो; अनि तिनीहरूले एउटा स्पन्जलाई*
सिर्काले भरे, र त्यसलाई एउटा हिसपमा* राखेर
उहाँको मुखमा पुर्‍याए। ३० यसकारण जब
येशूले सिर्का लिनुभयो, तब उहाँले भन्नुभयोः

*१९:१४ अक्षरशः 'छैटौं घड़ी'; *१९:२४ भजन २२:१८; *१९:२८ भजन २२:१५;
*१९:२९ स्पन्ज – प्रशस्त पानी सोस्ने नरम वस्तु; *१९:२९ हिसप – एक प्रकारको सुगन्धित पौधा

"पूरा भयो!" अनि उहाँले आफ्नो शिर
झुकाएर आफ्नो आत्मा सुम्पिदिनुभयो।
३१ यसकारण त्यो दिन तयारीको दिन
भएको हुनाले विश्रामदिनमा, (किनकि त्यो
विश्रामदिन ठूलो दिन थियो), ती शरीरहरू
क्रूसमा नरहून् भनेर यहूदीहरूले पिलातसलाई
तिनीहरूका खुट्टा भाँचिऊन् र तिनीहरू लगिऊन्
भनी विन्ती चढ़ाए। ३२ तब सिपाहीहरू आए,
अनि पहिलोचाहिँका खुट्टा भाँचिदिए र अर्को-
चाहिँका पनि, जो उहाँसँगै क्रूसमा टँगाइएको
थियो। ३३ तर जब तिनीहरू येशूकहाँ आए,
र उहाँलाई पहिल्यै मरिसक्नुभएको देखे, तब
तिनीहरूले उहाँका खुट्टा भाँचेनन्। ३४ तर
सिपाहीहरूमध्ये एउटाले उहाँको कोखामा
भालाले घोच्यो, अनि तुरुन्तै रगत र पानी
निस्के। ३५ अनि तिमीहरूले विश्वास गर्न सक
भनेर जसले यो देख्यो, उसैले गवाही दिएको हो,
अनि उसको गवाही सत्य छ; अनि सत्य बोल्छु
भनी उसले जान्दछ। ३६ किनकि 'उहाँको एउटै
पनि हड्डी भाँचिनेछैन'[क] भन्ने पवित्रशास्त्रको
वचन पूरा होओस् भनेर नै यी कुराहरू भएका
हुन्। ३७ अनि फेरि अर्को ठाउँमा पवित्रशास्त्रले
भन्दछ, 'जसलाई तिनीहरूले घोचेका थिए,
उहाँलाई तिनीहरूले हेर्नेछन्।'[ख]
३८ अनि त्यसपछि अरिमथियाका यूसुफले,
येशूका चेला भएका हुनाले, तर यहूदीहरूको
डरले गर्दा गुप्त थिए, येशूको शरीर लैजान पाऊँ
भनी पिलातसलाई विन्ती गरे; अनि पिलातसले
अनुमति दिए। यसकारण तिनले आएर येशूको
शरीर लगे। ३९ अनि निकोदेमस पनि, जो पहिले
येशूकहाँ राती आएका थिए, पचास सेरजति
मिसाएर बनाएको गन्धरस[ग] र अगरु[घ] लिई आए।
४० तब तिनीहरूले येशूको शरीर लगे, अनि
यहूदीहरूको लाश गाड्ने रीतिअनुसार यसलाई
सुगन्धित मसलाहरूसित सुती कपड़ाहरूमा
लपेटे। ४१ अब उहाँ क्रूसमा टँगाइनुभएको
ठाउँमा एउटा बगैंचा थियो; अनि त्यस बगैंचामा
एउटा नयाँ चिहान थियो, जसमा कहिल्यै
कुनै मानिस राखिएको थिएन। ४२ यसकारण
यहूदीहरूको तयारीको दिनको कारणले गर्दा
तिनीहरूले येशूलाई त्यहीं राखे, किनकि त्यो
चिहान नजिकै थियो।

## रित्तो चिहान

मत्ती २८:१-८; मर्कूस १६:१-८;
लूका २४:१-१२

२० तर हप्ताको पहिलो दिनमा बिहानै,
अँध्यारो छँदै मरियम मग्दलिनी चिहानमा आइन्,
र चिहानबाट ढुङ्गा हटाइएको देखिन्। २ तब तिनी
दगुरिन्, अनि शिमोन पत्रुस र अर्को चेलाकहाँ,
जसलाई येशूले प्रेम गर्नुहुन्थ्यो, आइन्, र
तिनीहरूलाई भनिन्: "तिनीहरूले प्रभुलाई
चिहानबाट लगेछन्, तिनीहरूले उहाँलाई कहाँ
राखेका छन्, हामी जान्दैनौं।" ३ यसकारण पत्रुस
र त्यो अर्को चेला बाहिर निस्के र चिहानतिर
आए। ४ अनि ती दुवै सँग-सँगै दगुरे; अनि अर्को
चेलाले चाहिँ पत्रुसलाई उछिने र चिहानमा पहिले
आइपुगे। ५ अनि उनले निहुरेर हेर्दा सुती कपड़ा
पड़िरहेका देखे; तर पनि उनी भित्र पसेनन्। ६ तब
उनलाई पछ्याउँदै शिमोन पत्रुस आए, अनि
चिहानभित्र पसे, अनि सुती कपड़ा पड़िरहेका
देखे; ७ अनि उहाँको शिरमा बाँधिएको रुमाल-
चाहिँ सुती कपड़ासँग पड़िरहेको होइन, तर
अलग्गै एक ठाउँमा लपेटिएको देखे। ८ तब

[क]१९:३६ भजन ३४:२०; [ख]१९:३७ जकरिया १२:१०; [ग]१९:३९ गन्धरस – एक प्रकारको पोथ्रे रूखबाट निकालिएको 'मर' भनिने चोप, जसबाट धूप, सुगन्धआदि बन्छन्, जसलाई लाशमा पनि लगाइन्छ;
[घ]१९:३९ अगरु – 'अलो' भनिने धूपी जातको सुगन्धित रूखका पात र काठबाट तयार पारिएको धूप

चिहानमा पहिले आउने अर्को चेला पनि भित्र
पसे, अनि उनले देखे, र विश्वास गरे। ९ किनभने
अहिलेसम्म पनि 'उहाँचाहिँ मरेकाहरूबाट बौरेर
उठ्नैपर्छ'* भन्ने पवित्रशास्त्रको वचन तिनीहरूले
जानेका थिएनन्। १० तब चेलाहरू फेरि आ-
आफ्ना घर गए।

## प्रभु मरियम मग्दलिनीकहाँ देखा पर्नुहुन्छ

मत्ती २८:९-१०; मर्कूस १६:९-११

११ तर मरियमचाहिँ चिहानमा बाहिरपट्टि
रुँदै उभिरहिन्, अनि रुँदै-रुँदै तिनले निहुरेर
चिहानभित्र हेरिन्। १२ अनि जहाँ येशूको शरीर
राखिएको थियो, त्यहाँ तिनले सेतो वस्त्र
पहिरेका दुई स्वर्गदूतहरूलाई एउटालाई शिरपट्टि,
अर्कोलाई पाउपट्टि बसिरहेका देखिन्। १३ अनि
उनीहरूले तिनलाई भने: "हे नारी, तिमी किन
रुन्छ्यौ?" तिनले उनीहरूलाई भनिन्: "किनकि
तिनीहरूले मेरा प्रभुलाई लगेका छन्, र उहाँलाई
कहाँ राखेका छन्, म जान्दिनँ।" १४ अनि यसो
भनेर तिनी पछिल्तिर फर्किन्, अनि येशूलाई
उभिरहनुभएको देखिन्, अनि उहाँ येशू हुनुहुन्छ
भनी थाह पाइनन्। १५ येशूले तिनलाई भन्नुभयो:
"हे नारी, तिमी किन रुन्छ्यौ? तिमी कसलाई
खोज्छ्यौ?" तिनले उहाँलाई माली होलान् भनी
ठानेर उहाँलाई भनिन्: "हजुर, तपाईंले उहाँलाई
यहाँबाट लैजानुभएको छ भने तपाईंले उहाँलाई
कहाँ राख्नुभएको छ, मलाई भन्नुहोस्, र म
उहाँलाई लैजानेछु।" १६ येशूले तिनलाई
भन्नुभयो: "मरियम!" तिनले पछिल्तिर फर्केर
उहाँलाई भनिन्: "रब्बोनी!" अर्थात् 'गुरुज्यू!'
१७ येशूले तिनलाई भन्नुभयो: "मलाई नछोऊ,
किनभने म अझै माथि मेरा पिताकहाँ गएको
छैनँ; तर मेरा भाइहरूकहाँ जाऊ, र उनीहरूलाई
भनिदेऊ, मचाहिँ माथि मेरा पिता र तिमीहरूका
पिता, अनि मेरा परमेश्वर र तिमीहरूका
परमेश्वरकहाँ जान्छु।" १८ मरियम मग्दलिनी
आएर, "मैले प्रभुलाई देखें, र उहाँले मलाई यी
कुराहरू भन्नुभयो" भनी चेलाहरूलाई बताइन्।
१९ तब त्यही दिन अर्थात् हप्ताको पहिलो
दिन, साँझमा यहूदीहरूको डरले गर्दा चेलाहरू
भेला भएका ठाउँमा ढोकाहरू जब बन्द थिए,
येशू आउनुभयो र बीचमा उभिनुभयो, अनि
तिनीहरूलाई भन्नुभयो: "तिमीहरूलाई शान्ति
होस्!" २० अनि यसो भनेर उहाँले तिनीहरूलाई
आफ्ना हात र आफ्नो कोखा देखाउनुभयो। तब
चेलाहरू प्रभुलाई देखेर खुशी भए। २१ तब
येशूले तिनीहरूलाई फेरि भन्नुभयो: "तिमीहरूलाई
शान्ति होस्! जसरी मेरा पिताले मलाई पठाउनु-
भएको छ, उसरी नै म पनि तिमीहरूलाई
पठाउँछु।" २२ अनि यसो भनेर उहाँले तिनी-
हरूमाथि सास फुकिदिनुभयो, र तिनीहरूलाई
भन्नुभयो: "पवित्र आत्मा लेओ। २३ जस-
जसका पाप तिमीहरू क्षमा गर्दछौ, ती
तिनीहरूलाई क्षमा हुन्छन् अनि जस-जसका पाप
तिमीहरू राख्दछौ, ती राखिन्छन्।"

## प्रभु थोमाकहाँ देखा पर्नुहुन्छ

२४ तर दिदिमस भनिने थोमाचाहिँ, जो
बाह्रजनामा एक थिए, येशू आउनुहुँदा उनीहरूसँग
थिएनन्। २५ यसकारण अरू चेलाहरूले तिनलाई
भने: "हामीले प्रभुलाई देखेका छौं।" तर तिनले
उनीहरूलाई भने: "जबसम्म म उहाँका हातमा
काँटीहरूका डोब देख्दिनँ, अनि आफ्नो औंला ती
काँटीहरूका डोबमा हाल्दिनँ र आफ्नो हात उहाँको
कोखामा हाल्दिनँ, तबसम्म म विश्वास गर्नेछैनँ।"
२६ अनि आठ दिनपछि उहाँका चेलाहरू
फेरि कोठाभित्र थिए; अनि उनीहरूसँग थोमा

*२०:९ भजन १६:१०

पनि थिए; तब ढोकाहरू बन्द भएकैमा येशू
आउनुभयो र बीचमा उभिनुभयो, र भन्नुभयोः
"तिमीहरूलाई शान्ति होस्!" २७ तब उहाँले
थोमालाई भन्नुभयोः "तिम्रो औंला यहाँ ल्याऊ, र
मेरा हात हेर; अनि तिम्रो हात यहाँ ल्याऊ र मेरो
कोखाभित्र हाल; अनि विश्वास नगर्ने होइन, तर
विश्वास गर्ने होऊ।" २८ अनि थोमाले जवाफ
दिएर उहाँलाई भनेः "हे मेरा प्रभु! र हे मेरा
परमेश्वर!" २९ येशूले तिनलाई भन्नुभयोः
"थोमा, तिमीले मलाई देखेका हुनाले तिमीले
विश्वास गरेका छौ; उनीहरू धन्य हुन्, जसले
देखेका छैनन्, तापनि विश्वास गरेका छन्।"
३० अनि साँच्चै येशूले आफ्ना चेलाहरूका
सामु अरू धेरै चिन्हहरू देखाउनुभयो, जो यस
पुस्तकमा लेखिएका छैनन्; ३१ तर येशू नै
परमेश्वरका पुत्र 'ख्रीष्ट' हुनुहुन्छ भनी तिमीहरूले
विश्वास गर्न सक र विश्वास गरेर तिमीहरूले
उहाँको नामद्वारा जीवन पाओ भनी यीचाहिँ
लेखिएका हुन्।

## तिबेरियासको समुद्रमा प्रभु येशू

२१ यी कुराहरूपछि तिबेरियासको समुद्रमा
येशूले आफूलाई फेरि चेलाहरूकहाँ प्रकट
गर्नुभयो; अनि यस प्रकारले उहाँले आफूलाई
प्रकट गर्नुभयो – २ त्यहाँ शिमोन पत्रुस, दिदिमस
भनिने थोमा, गालीलको कानाका नथनएल,
जब्दीका छोराहरू र उहाँका चेलाहरूमध्ये अरू
दुईजना सँगै थिए। ३ शिमोन पत्रुसले तिनीहरूलाई
भनेः "म ता माछा मार्न जान्छु।" तिनीहरूले
उनलाई भनेः "हामी पनि तिमीसँगै जान्छौं।"
तिनीहरू गए र तुरुन्तै एउटा डुङ्गामा चढ़े; अनि त्यो
रात तिनीहरूले एउटै पनि पक्रेनन्। ४ तर बिहान
हुँदाखेरि येशू किनारमा उभिनुभयो; तर उहाँ
येशू हुनुहुन्छ भनी चेलाहरूले चिनेनन्। ५ तब
येशूले तिनीहरूलाई भन्नुभयोः "हे नानीहरूहो,
तिमीहरूसँग केही खानेकुरा छ?" तिनीहरूले
उहाँलाई जवाफ दिएः "छैन।" ६ उहाँले तिनी-
हरूलाई भन्नुभयोः "डुङ्गाको दाहिनेपट्टि जाल
हान, र तिमीहरूले पाउनेछौ।" यसकारण
तिनीहरूले जाल हाने, अनि अब माछाहरूको
थुप्रोले गर्दा तिनीहरूले त्यसलाई तान्न सकेनन्।
७ यसकारण त्यस चेलाले, जसलाई येशूले प्रेम
गर्नुहुन्थ्यो, पत्रुसलाई भनेः "उहाँ प्रभु हुनुहुन्छ!"
जब शिमोन पत्रुसले 'उहाँ प्रभु हुनुहुन्छ' भन्ने
सुने, तब उनले बाहिरपट्टि लाउने लुगा कम्मरमा
बेरे; किनकि उनी नाङ्गा* थिए, अनि समुद्रमा
हाम फाले। ८ अनि अरू चेलाहरू एउटा सानो
डुङ्गामा माछाहरू भएको जाल तान्दै-तान्दै आए,
(किनकि तिनीहरू जमिनदेखि टाढ़ामा थिएनन्,
तर प्रायः तीन सय फीटजतिमा थिए)।
९ तब तिनीहरू जमिनमा उत्रिनासाथ
तिनीहरूले त्यहाँ कोइलाको आगो र त्यसमाथि
माछा राखिएको, अनि रोटी देखे। १० येशूले
तिनीहरूलाई भन्नुभयोः "तिमीहरूले भर्खरै
पक्रेका माछाहरूबाट केही ल्याओ।" ११ शिमोन
पत्रुस डुङ्गामा चढ़े, अनि एक सय त्रिपन्नओटा
ठूला-ठूला माछाहरूले भरिएको जाललाई तानेर
जमिनमा ल्याए; अनि यति धेरै भए तापनि
जाल फाटेको थिएन। १२ येशूले तिनीहरूलाई
भन्नुभयोः "आओ र खाना खाओ।" अनि उहाँ
प्रभु हुनुहुन्छ भनी जानेर चेलाहरूमध्ये कसैले
पनि 'तपाईं को हुनुहुन्छ?' भनी उहाँलाई सोध्ने
साहस गरेनन्। १३ तब येशू आउनुभयो, अनि
रोटी लिनुभयो, र तिनीहरूलाई दिनुभयो, अनि
त्यसैगरी माछा पनि। १४ अब मरेकाहरूबाट
बौरेर उठ्नुभएपछि येशूले आफूलाई आफ्ना
चेलाहरूकहाँ प्रकट गर्नुभएको योचाहिँ तेस्रो
पटक थियो।

*२१:७ अर्थात् भित्रपट्टि लगाइने लुगा मात्र भएको अवस्था

१५ यसकारण तिनीहरूले भोजन खाइसके-
पछि येशूले शिमोन पत्रुसलाई भन्नुभयोः "हे
शिमोन, योनाका छोरा, के तिमी मलाई यिनी-
हरूले भन्दा बेसी प्रेम गर्छौ?" उनले उहाँलाई
भनेः "हजुर प्रभु, तपाईं जान्नुहुन्छ, म तपाईंलाई
माया गर्छु।" उहाँले उनलाई भन्नुभयोः "मेरा
पाठाहरूलाई * चराऊ।" १६ उहाँले उनलाई फेरि
दोस्रोपल्ट भन्नुभयोः "हे शिमोन, योनाका छोरा,
के तिमी मलाई प्रेम गर्छौ?" उनले उहाँलाई भनेः
"हजुर प्रभु, तपाईं जान्नुहुन्छ, म तपाईंलाई माया
गर्छु।" उहाँले उनलाई भन्नुभयोः "मेरा
भेड़ाहरूलाई हेरचाह गर।" १७ उहाँले उनलाई
तेस्रोपल्ट भन्नुभयोः "हे शिमोन, योनाका छोरा,
के तिमी मलाई माया गर्छौ?" उहाँले उनलाई
तेस्रोपल्ट 'के तिमी मलाई माया गर्छौ?' भनी
भन्नुभएकोले पत्रुस दुःखित भए। अनि उनले
उहाँलाई भनेः "प्रभु, तपाईं सबै कुरा जान्नुहुन्छ;
म तपाईंलाई माया गर्छु भनी तपाईं जान्नुहुन्छ।"
येशूले उनलाई भन्नुभयोः "मेरा भेड़ाहरूलाई
चराऊ। १८ साँचो-साँचो म तिमीलाई भन्दछु,
जब तिमी जवान थियौ, तब तिमी आफैले कम्मर
कस्थ्यौ, अनि जहाँ जान चाहन्थ्यौ, त्यहीं घुम्थ्यौ,
तर जब तिमी बूढ़ा हुनेछौ, तब तिमीले आफ्ना
हात पसार्नेछौ, अनि अर्कोले तिम्रो कम्मर
कस्नेछ, र जहाँ तिमी चाहँदैनौ, त्यहाँ तिमीलाई
लैजानेछ।" १९ तर कस्तो प्रकारको मृत्युद्वारा
उनले परमेश्वरको महिमा गर्नेछन्, त्यसलाई
सङ्केत गर्दै उहाँले यो भन्नुभयो। अनि यसो
भनेपछि उहाँले उनलाई भन्नुभयोः "मेरो पछि
लाग।"

२० तब पत्रुसले पछिल्तिर फर्केर येशूले प्रेम
गर्नुभएको त्यस चेलालाई पछि-पछि आइरहेका
देखे, जसले बेलुकीको भोजनको समयमा उहाँको
छातीमा अड़ेसिएर भनेका थिएः 'प्रभु, तपाईंलाई
पक्राइदिने को हो?' २१ तिनलाई देखेर पत्रुसले
येशूलाई भनेः "प्रभु, यिनको चाहिँ के होला?"
२२ येशूले उनलाई भन्नुभयोः "म नआउन्जेल यिनी
रहिरहून् भन्ने इच्छा मैले गरें भने पनि तिमीलाई
यसको के चासो? तिमीचाहिँ मेरो पछि
लाग।" २३ यसकारण 'यो चेलाचाहिँ मर्दैन' भन्ने
कुरा भाइहरूको बीचमा फैलियो। तरै पनि येशूले
ता यिनी मर्दैनन् भनी उनलाई भन्नुभएको थिएन,
तर 'म नआउन्जेल यिनी रहिरहून् भन्ने इच्छा
मैले गरें भने पनि तिमीलाई यसको के चासो?'
पो भन्नुभएको थियो।

२४ यी कुराहरूको विषयमा गवाही दिने
चेला यिनी नै हुन्, अनि यी कुराहरू यिनले लेखे;
अनि हामी जान्दछौं, यिनको गवाही सत्य छ।
२५ अनि येशूले गर्नुभएका अरू पनि धेरै कुराहरू
छन्, ती एक-एक गरी लेखिएका भए मलाई
लाग्छ, लेखिएका पुस्तकहरू संसारमा पनि
अटाउनेथिएनन्। आमेन!!

*२१:१५ अर्थात् भेड़ाका पाठाहरूलाई